द महेशचन्द्र रेग्मी लेक्चर, 2004

# दार्जीलिङमा नेपाली जाति र जनजातीय चिनारीका नया अडानहरू

कुमार प्रधान

सोशल साइन्स बहाः
SOCIAL SCIENCE BAHA

सोसल साइन्स बहा:द्वारा 18 अगस्ट 2004 मा कमलपोखरीस्थित रूसी सांस्कृतिक केन्द्र, काठमाडौंमा आयोजित सभामा डा. कुमार प्रधानद्वारा दिइएको व्याख्यानको पूर्ण पाठ।



प्रथम संस्करण : सन् 2005

प्रकाशक
**सोसल साइन्स बहाः**
हिमाल एसोसिएसन
पो.ब.नं. 166, पाटनढोका, ललितपुर, नेपाल
फोन : 5542544/5548142 • फ्याक्स : 5541196
इमेल : baha@himalassociation.org
वेबसाइट : www.himalassociation.org/baha

ISBN 99933 43 68 4

## महेशचन्द्र रेग्मी व्याख्यानमाला

# दार्जीलिङमा नेपाली जाति र जनजातीय चिनारीका नयाँ अडानहरू

सर्वप्रथम म कृतज्ञता प्रकट गर्छु यस व्याख्यानका आयोजक सोसल साइन्स बहाः, हिमाल एसोसिएसनलाई, यसरी दोस्रो महेशचन्द्र रेग्मी व्याख्यान दिने सम्मान दिएर दिवङ्गत रेग्मीज्यूप्रति श्रद्धाञ्जली अर्पण गर्ने अवसर दिनुभएकोमा। अर्थनैतिक इतिहास लेखनको सूत्रपात गर्दै स्वर्गीय रेग्मीज्यू आफ्नै विशिष्टतासँग एउटा वैज्ञानिक दृष्टि लिएर नेपालको इतिहास लेखनमा एक पथिकृत नै बन्नुभयो। इतिहासको विद्यार्थीको नाताले मैले शोधकार्य सुरु गर्दा एक अनुसन्धानेत्सुकका रूपमा मैले गरेको नेपालको तीर्थयात्राहरूमा इतिहास शिरोमणि बाबुराम आचार्य, पण्डित नयनराज पन्त, धनवज्र वज्राचार्य, महेशचन्द्र रेग्मीज्यूको दर्शन र उहाँहरूसँग कुराकानी गर्ने निधो गरेको थिएँ।

नेपालको परम्परागत इतिहास लेखनबाट छुट्टै भएर इतिहास केवल 'खुँडा र खुकुरीको तमासा' होइन, यो केवल महापुरुषहरूको जीवनी होइन र इतिहासको प्रक्रियामा अर्थनीति कसरी कारकतत्त्व बन्दछ भन्ने महत् कार्य नेपालको इतिहास लेखन पद्धतिमा महेशचन्द्र रेग्मीज्यूले गरेर देखाइदिनुभएको एउटा कीर्तिमान छ। काठमाडौंको लाजिम्पाटमा उहाँलाई भेट्न गएको र उहाँले दिनुभएको समय अनि उहाँ पहिलोपल्ट दार्जीलिङ आउनुहुँदा मेरो वासस्थानमा पाउकष्ट गरिदिनुभएको सम्झना अझ आलै छ।

'समाजशास्त्र' विषयकै छात्र नभई आफू इतिहासको छात्र भएकोले अनि आफ्नो विशेष अध्ययनको विषय गरी 'युरोपको आधुनिक इतिहास' भए पनि आफ्नै थलो दार्जीलिङको इतिहास, विशेष त्यहाँ हामी नेपालीहरूको बसोबास, त्यहाँ उठ्ने मागहरूमा हाम्रो आशा र आकाङ्क्षाका प्रतिबिम्बहरू तथा तिनका कारण मेरो शोधको विषय बनेको स्नातकको विद्यार्थी हुँदादेखि नै हो। भारतमा नेपालीहरूको बसोबास धेरै ठाउँमा भए पनि दार्जीलिङ पहाडलाई मूल गढ भनी सबैले स्वीकारेको तथ्य हो।

दार्जीलिङमा नेपालीहरूका दुई मुख्य मागहरू भएको मैले खुट्याएको थिएँ। एउटा छुट्टै जाति भएको आधारमा स्वायत्त शासन वा स्वशासनको अधिकार अनि अर्को विभिन्न स्तरमा नेपाली भाषाको मान्यताको माग। अनि यो निक्र्यौल दार्जीलिङमा नेपाली जातित्व विकासको पृष्ठभूमिका रूपमा मेरो जिज्ञासाको विषय बन्यो। त्यतिले भएन। मैले मूलमै जाने निश्चय गरेँ अनि नेपाली जाति बुझ्न नेपालको इतिहास नबुझी नहुने ठानेँ।

त्यतिन्जेल नेपालको इतिहास नेपाली भएको नाताले मेरा लागि एउटा सतही रुचिको विषय मात्र थियो। तर परम्परागत इतिहास लेखनभन्दा छुट्टै महेशचन्द्र रेग्मीज्यूका कृतिहरूबाट म प्रभावित नभएको होइन। मेरो शोधकार्यमा उहाँका केही विचारसँग मतभिन्नता भएको उल्लेख गरिए पनि उहाँका कृतिहरूबाट उद्धरण राखिएका छन् र उहाँको प्रभाव मेरो शोधकार्यमा स्पष्ट परिलक्षित छ। नेपाली जातीयताको जन्म र विकासमा नेपालको कथित राष्ट्रिय एकीकरणको भूमिका मैले विद्यावारिधिको निम्ति शोधकार्यको विषय छानेँ। कलकत्ता विश्वविद्यालयद्वारा सन् 1984 मा स्वीकृत मेरो शोधकार्यको सङ्क्षिप्त रूप Gorkha Conquests: The Process and Consequences of the Unification of Nepal with Particular Reference to Eastern Nepal को प्रकाशन सन् 1991 मा भएको थियो।

त्यो पुस्तकको अन्तिमभन्दा एक अघिल्लो पृष्ठमा छापिएको छ :

> ... it will not be amiss to mention that in India the Nepali language has helped to bring about a closer integration of the Kirats, Magars, Gurungs, Tamangs, Newars, Brahmans, Chhetris and others. The Nepali language is spoken there as the first language or 'the mother tongue.' There are other socio-economic factors behind the use of a feeling of identity among the Indian Nepalis … But that is different story which receives a detailed treatment in a separate study. Footnote: Author's work on Darjeeling in the context of the birth and growth of the nationality feeling among the Nepalese of the place, unpublished.

यो काम अपूर्ण र अप्रकाशित नै छ। पण्डितहरूको भाषामा नेपालमा

समिम्रित अनेकताको (pluralist) सहअस्तित्व धेरै पाइन्छ भने भारतमा सामन्वयिक (syncretic) एकीभवन पाइन्छ। नेपालमा कमिला प्रक्रिया छ भने हाम्रो दार्जीलिङमा मौरी प्रक्रिया छ नेपाली जातिको संरचनामा।

तर आफ्नो पुस्तक *पहाड र खोला* हरूमा इन्द्रबहादुर राईले एक ठाउँमा लेख्नुभएको छ :

> उसले आफ्ना दाज्यू-भाइहरूलाई हेऱ्यो :
>
> "त्योभन्दा म गोरो छु, म भिन्दै हुँ। त्योभन्दा म साँवलो छु, म भिन्दै हुँ। मेरो नाक त्यसको भन्दा समतल तर त्यसको भन्दा डाँडे, म भिन्दै हुँ। ...."
>
> उसलाई मुख बाउँदो एउटा शङ्काले सलक्क निल्छ : हामी हौँ के एकै जातीय सन्तान? हौँ के हामी एउटै जाति?

बितेका केही वर्षहरूदेखि दार्जीलिङतिर पनि नेपाली जातिभित्रै आफ्नो छुट्टै चिनारीको प्रश्न उठाउन थालिएकाले मेरो खोजीमा एउटा नयाँ आयाम जोडिएको जस्तो लाग्छ। प्रश्न गर्नुपर्ने, सोच्नुपर्ने र यस विषयबारे विशद र गहन चर्चा गर्नुपर्ने अनिवार्य लागेको छ। यिनै विषयमै मेरो यो व्याख्यान छ : एउटा महत् जिज्ञासाका रूपमा।

यहाँ अङग्रेजी भाषामा प्रयुक्त पारिभाषिक शब्दावलीले जन्माउने गरेका कठिनाइहरूप्रति सचेत रहनुपर्ने पनि अनुभव गर्दछु। युरोपका धेरैजसो राष्ट्रहरू एकभाषी (mono-lingual) भएकाले होला एउटा भाषा र अन्य साझा तत्त्वहरूको आधारमा विकसित जनगोष्ठी बुझाउन उनीहरू nation, nationality जस्ता शब्दहरू प्रयोग गर्छन्। नेपालका कुनै नागरिकले तिनको nationality बारे गरिएको प्रश्नको उत्तरमा नेपाली भन्न वा लेख्नुपर्छ। भारतमा हामीले त्यसरी लेख्यौँ भने हामी विदेशी मानिन्छौँ, हाम्रो nationality हो भारतीय अथवा Indian। भारतको सन्दर्भमा नेपालीभाषीको कुरा उठ्दा sub-nationality प्रयोग गर्नुपर्ने भएको पाउँछौ, अनि भाषाबारेको प्रश्नमा नेपाली लेखेर सन्तुष्ट हुन्छौँ।

अन्तर्निहित राजनैतिक सङ्केतलाई त्यागेर जातित्वको अर्थमा nationality शब्दले राष्ट्र वा राजनैतिक सीमाहरू नाघ्ने गरेको अचेल राजनीतिक सिद्धान्तहरूले मान्न थालेका छन्। फेरि भएन ग्रीक भाषामा pagan, heathen अर्थ लाग्ने ethnikos बाट व्युत्पन्न र सन् 1953 मा अमेरिकी समाजवैज्ञानिक David Reisman द्वारा पहिलोपल्ट उपयोग गरिएको ethnicity, ethnic शब्द nation-

ality कै पर्यायवाचीकैँ प्रयोग गरिएको पनि पाइन्छ। उदाहरणार्थ, भारतका धेरै राष्ट्रिय पत्रपत्रिकाले दार्जीलिङका नेपालीहरूका विभिन्न मागहरूलाई ethnic demands भनी लेख्ने गर्छन् अनि नेपाली जातिभित्र किराँत, तामाङ, मगर, नेवार, सुनुवार आदि जनगोष्ठीका प्रसङ्ग उठाउँदा पनि ethnic शब्द नै चलाएको देखिन्छ। आफै अप्ठ्यारामा परेर होला यी जनगोष्ठीहरूका निम्ति sub-ethnic शब्द प्रयोग गरेको पनि देखिन्छ।

'नेपाली' शब्दले एउटा भाषा, राजनैतिक अर्थमा नेपालको राष्ट्रियता अनि सांस्कृतिक अर्थमा राजनैतिक वा राष्ट्रिय सीमा नाघेर धेरै कारणले एकबद्ध भएको जनगोष्ठी बुझाउँछ।

त्यसैले यस चर्चामा मैले 'नेपाली' शब्द नेपाल अधिराज्यभित्र यसका सबै नागरिकहरूका निम्ति प्रयुक्त हुने अर्थमा प्रयोग नगरी अथवा राष्ट्रिय र राजनैतिक अर्थमा नभई सांस्कृतिक अर्थमा प्रयोग गरेको छु। अनि किराँत, तामाङ, गुरुङ, नेवार, सुनुवार आदिको निम्ति जनजाति शब्द उपयोग गरेको छु।

खीष्टाब्द उन्नाइसौँ शताब्दीका प्रथम दुई दशकभित्र वर्तमान नेपाल अधिराज्यको निर्माण वा राजनीतिक एकीकरणको प्रक्रिया वा नेपालले वर्तमान राजनैतिक आकार प्राप्त गर्ने प्रक्रम पूर्ण भएको थियो। यो प्रक्रिया र यसका परिणामहरूको विश्लेषण प्रकाशित शोधकार्यमा गरिसकेको छु जसको अन्तिम दुई वाक्य सारांशको रूपमा प्रस्तुत छ :

> "Scholars of Nepal invariably praise the cohesive role of the Hindu religion, but what is overlooked is the fact the culture and religion often assume the role of political ideology. If the theoretical rationale of the politically unified kingdom of Nepal was expressed by the Brahmanical Hindu religion, its pragmatic basis was represented in the class of <u>tagadhari</u> high castes who enjoyed a monopoly of power." (नेपालका विद्वान्हरू हिन्दू धर्मको संशक्तिशील भूमिकाको प्रशंसा गर्दछन्, तर संस्कृति र धर्मले राजनैतिक सिद्धान्तको भूमिका ग्रहण गर्छन् भन्ने तथ्यको भने उपेक्षा गर्छन्। राजनैतिक एकीकरण भएको नेपाल अधिराज्यको वैचारिक मूलधार ब्राह्मणवादी हिन्दू धर्मले अभिव्यक्त गर्थ्यो भने त्यसको यथार्थिक आधारको प्रतिनिधित्व सत्ताको एकाधिकार उपभोग गर्ने तागाधारी उच्च जातहरूमा हुन्थ्यो।)

गोर्खाको विजय अभियानको फलस्वरूप नेपालको राजनैतिक एकीकरण भएकै हाराहारीमा भारतमा फिँजिइरहेको ब्रिटिस सत्ताको आँखा सिक्किमको त्यस भूभागमा पर्न थालेको थियो जुन भूभाग र पछि भोटाङबाट गाभिएका इलाका मिलाएर सन् 1866 मा वर्तमान दार्जीलिङ जिल्ला बन्यो।

ब्रिटिस भारतको एउटा जिल्लामा दार्जीलिङको परिणति र त्यसपछि घना देखिने गरी नेपालीहरू सङ्ख्यागरिष्ठ किन र कसरी हुन पुगे सोको अनुसन्धान आवश्यक ठानेरै मेरो शोधकार्य बढेको थियो। यी विषयमा के तथ्यहरू प्रस्तुत गर्न सकिन्छ ?

वर्तमान दार्जीलिङ जिल्लाको क्षेत्रफल 1256.6 वर्गमाइल छ। सन् 1835 मा अङ्ग्रेजलाई कथित रूपमा भेट चढाइएको 138 वर्गमाइल क्षेत्रमा सन् 1839 सम्ममा केवल एक सय जनसङ्ख्या थियो। त्यही वर्ष काठमाडौँबाट सरुवा भई दार्जीलिङका प्रथम प्रशासक नियुक्त हुने डा. ए. क्याम्पबेल (नेपालका दस्तावेजमा किमिल साहब) ले दस वर्षपछि सन् 1849 मा त्यो सङ्ख्या दस हजार पुग्यो भनि लेखेका छन्। धेरैले क्याम्पबेललाई उद्धृत गरेका छन्। दोर्जेलिङ वा दार्जीलिङको जे नै अर्थ लगाइए पनि यस नाउँले सुरुमा वर्तमान महाकाल डाँडा र वरिपरिको सीमित भूखण्ड मात्र जनाउँथ्यो। यो कुरा हामी समकालिक दस्तावेजहरूबाट जान्न सक्छौँ। उल्लिखित इलाकाबाहिर रहेका मानव बस्तीहरूबारे समकालिक उल्लेख पाइन्छन्। त्यसबाहेक सन् 1835 मा सिक्किमले दिएको भूभागमा नेपाल सीमानगिच पर्ने पुलबजार, सुकेपोखरी, मिरिक क्षेत्रहरू अनि समतलमा सिलीगुडी र तिनताक भोटाङको इलाका कालेबुङ परेको थिएन। यी जम्मै भाग निर्जन थिए भनी मान्न सकिँदैन।

सन् 1848 मा दार्जीलिङ, सिक्किम र पूर्वी नेपाल भ्रमण गरी *हिमालयन जर्नल्स* लेख्ने प्रसिद्ध उद्भिदशास्त्री जोसेफ डाल्टन हूकरले त्यहाँ उल्लेख गरेका छन्, “अहिले अरुणको पश्चिमतिर सीमित भए पनि मगरहरू सिक्किमका आदिवासी थिए, जहाँबाट तिनीहरूलाई पश्चिमतिर अहिलेको लिम्बूहरूको देशमा लाप्चेहरूले लखेटे अनि लिम्बूहरूले तिनीहरूलाई अझ पश्चिमतिर लखेटे।” तिब्बत भ्रमणमा जाँदा शरतचन्द्र दासले कञ्चनजङ्गाको पश्चिमपट्टि कांगपाचेन उपत्यकामा मगरहरूका किल्ला र भग्नावशेष देखेको उल्लेख आफ्नो भ्रमण वृत्तान्त *Journey to Lhasa and Central Tibet, 1902* मा गरेका छन्। तिनले त्यहाँ सुनेको मौखिक परम्पराअनुसार मगरहरूलाई भोटेहरू आएर त्यहाँबाट लखेटेका थिए। नोर्दे र मरिसको भनाइमा दासको त्यस कुरामा केही सत्यता छ। कारण, नेपालको सुदूर पूर्व (वा दार्जीलिङसँग सिमाना गाँसिएको क्षेत्र) मा

पनि मगर बस्तीहरू र मगर बोलीको प्रचलन पाइन्छ।

सिक्किमका राजा थुटोब नामग्याल र रानी योशे डोल्माले सन् 1908 मा तिब्बतीमा 'प्राचीन दस्तावेजहरूको आधारमा' लेखेका[1] सिक्किमको इतिहासमा पनि सत्रौँ शताब्दीमा (सन् 1641) तिब्बतीहरूले सिक्किम पसी आफ्नो शासन कायम गर्दा त्यहाँ लाप्चे र मगर गाउँहरू जित्नुपरेको उल्लेख छ। दार्जीलिङमा मगरजुङ (मगरजोङ=मगरको किल्ला ?) नाउँ भएको ठाउँ छ। सिक्किमको यो इतिहासअनुसार 'पहाडिया (लिम्बू र मगर) मुखियाहरूलाई बाहिर हिँड्दा आफ्नो दर्जा र सम्मान प्रदर्शनका निम्ति राज्यबाट रेशमको वस्त्र लगाउने र नगारा पिटाउने अधिकार प्राप्त भएका सनदहरू ती पुराना परिवारहरूसँग अझ देख्न पाइन्छ।

अङ्ग्रेजले सन् 1850 सम्म वर्तमान दार्जीलिङ जिल्लाका दार्जीलिङ सदर, खरसाङ र सिलीगुडी यी तीन महकुमा गाभ्नअघि यस भूभागमा नेपाली जातिभित्र पर्ने जनजाति गोष्ठीहरूको बसोबास थिएन भन्न सकिँदैन। सन् 1789 देखि 1815 सम्म गोर्खाहरूले कालेबुङ महकुमाबाहेक दार्जीलिङ जिल्लाका पहाड र समतलमा टिस्टा नदीसम्म सिक्किमलाई जितेर गाभेका थिए। त्यसपछि नेपाल र सिक्किममाझ सिमाना झगडा मिलाउन इस्ट इन्डिया कम्पनीका दुई अधिकारी क्याप्टेन लोयड् र ग्रान्ट सन् 1829 मा दार्जीलिङ भएर सिक्किम पुगेका थिए। लोयड्ले त्यस बेला त्यस ठाउँलाई 'the old Goorkha Station of Dorjeling' भन्दै त्यहाँ छ दिन बिताएको विवरण दिएका थिए।

दार्जीलिङको हावापानी र यस ठाउँको उपयोगिता बुझ्न अङ्ग्रेज गवर्नर-जनरलले उही क्याप्टेन लोयड् र अर्का एक जना च्यापम्यानलाई सन् 1836-37 मा खटाएका थिए। त्यो शीतकाल उनीहरूले दार्जीलिङमै बिताए। तिनताक दार्जीलिङमा नेपालबाट मानिसहरूको आउजाउ हुन्थ्यो भन्ने सङ्केत पाइन्छ। अङ्ग्रेजहरूको क्रियाकलापको चियो गर्न नेपालले बिराएको थिएन। बसतवारसिंह भण्डारीले दिएको रिपोर्टको एउटा अंश द्रष्टव्य छ :

> "... सुषिमको दोर्ज्येलिंमा अंगरेजले छाउनी हाली बसिरहेछ भन्या कुरा सुनिन लागिरहेछ ई कुरा साँचो झूटो क्या रहेछ अभींतर गरी पाका जान्या मानिस पठाई जस्ताको तस्तो षवर बुझि हजूरमा बिन्ती गरी

[1] यो पुस्तक लामा दावा साण्डुपद्वारा अङ्ग्रेजीमा History of Sikkim भनी अनूदित छ (अप्रकाशित)।

> पठा ... भनी मेहर भै बक्सि पठायाको लालमोहर आइपुग्याथ्यो ... सुषिम धर्मा तरफको बात बिहोरा जान्या बुझन्या 4 जना मानिस पठायांथ्यां सुषिमको बाटो गरी नंगेलुचा दोर्ज्येलिं पुगी सिंपालिदेषि तिस्टा पुगी मधेस निस्की धर्मा दालिमकोटसमेतको हालसुरत बुझी फर्क्याछ ... सुषिमाको दोर्जलिं भन्याको जगामा सुषिम्याले अंगरेजलाई कोठि रासन भनि जगा दियाको रहेछ तेही दोर्जलिंमा अंगरेजको 1 साहेप 1 ज्मादार 24 नाल सिपाहीसमेत छाउनी हाली बस्याको 14 मैन्हा भयेछ ... सिंपालिदेषि दोर्जेलिं संथीर बसी गयाको डाडो 20/25 कोस रहेछ तेसै सिंपालिदेषि दोर्जेलिंसम्म सटक बनाउन भनी मङ्सिरदेखि मधेसबाट बेलदार झिकाई राषेछ 60/50 बेलदार हामीले पनि देष्युं अरू अरू पनि आउँछ भंछं भनी येही विस्तारको षवर ल्यायांछ ... संवत् 1894 साल मिति पोष सुदि 12 रोज 1 मुकाम धनकुटा शुभम् ..."

लक्षवीर शाही र हेमदल थापा लेख्छन् :

> "... हामीहरूको षत् र अंग्रेजी षत्दि पाहाडको बाटो, दोर्जेलिङ सिपाही पठात्रौ ... कोही रयेतहरू सुषिम तरफ जान लाग्या भन्या जान हुँदैन भनी जबरजस्त गरी थाम्न्या काम् नगर्नु सुषिम तरफका रयेत् येस्तरफ आया भन्दा पनि वाहाँबाट जबरजस्त गरी थाम्न्या छैनन् यो कुरा त्राहा हाजसन साहेबसँग भै उन्बाट छोटा साहेबलाई पनी लेखी जान्याछ भनी हकुम आयाका अर्थ सिवानासिवानाको जगामा यो बन्दोबस्त चाहिन्यै कुरा हो यो कुराको बन्दोबस्त भयेछ बढिया भयो होला किमिल् (क्याम्पबेल) साहेब बाट जाँहाँ चाहिन्या हो वाहा सिवानाको निसाना राषी तक्रारि जमिन् हामीहेरूलाई सपुर्त गर्‍या पछि ... आउन्या काम गरौंला।"

तिनताक कति नेपालीहरू दार्जीलिङ क्षेत्रमा थिए ठीक आँकडा पाउन नसकिए पनि नेपालीहरूको आउजाउबारे अन्य केही समकालीन उल्लेख पाइन्छन्।

सन् 1839 मा क्याम्पबेल दार्जीलिङका शासक भएर आएपछि यस क्षेत्रको विकास हुन थाल्यो। नोभेम्बर 1840 मा किशनगन्जबाट एक जना अङ्ग्रेज अधिकारीले क्याम्पबेललाई लेखेको चिठीमा 25 हजार कम्पनी रुपियाँ जिम्मा लगाई शिवराज थापा सुबेदारलाई दार्जीलिङ पठाएको सूचना पाइन्छ। दार्जीलिङ

कचहरीमा सन् 1841 सम्म चलेको अधिनियममा अङ्ग्रेजी शब्द 'कुल्ली' को साटो नेपाली शब्द 'भरिया' (bharriahs) को प्रयोग विचारणीय छ। दार्जीलिङको सुरक्षा र बाटोघाटो मरम्मतको निम्ति सन् 1839 मा Sebundy Sappers नामक कार्यबल गठन भएको थियो। सन् 1862 मा प्रकाशित दार्जीलिङको एउटा भ्रमण वृत्तान्तमा त्यस कार्यबलबारे 'It is composed almost entirely of Nepalese' लेखिएको छ। सन् 1848 मा हूकरको भ्रमणमा तिनीसँग हिँड्ने दलमा थोरैमा एक जना गोर्खा भएको र अङ्ग्रेजहरूले सन् 1864 मा भोटाङमाथि धावा बोल्दा ब्रिटिस सेनामा गोर्खाहरू पनि भएको उल्लेख पाइन्छन्। समकालीन घटनावलीहरूबाट अङ्ग्रेजहरूले दार्जीलिङ लिएको समय यस इलाकामा धेरथोर नेपाली बोल्नेहरू समाहित भइसकेको प्रमाण लाग्छ।

अङ्ग्रेजी शासनसँगै इसाई धर्मप्रचारकहरू पनि दार्जीलिङ आउन थाले। जर्मनीको मोराविियाबाट आएको मोरावियन मिसनले सन् 1840 देखि 1860 सम्मको आफ्नो कार्यकालमा लाप्चे र नेपाली भाषामा कोशहरू तयार पारिरहेको र धर्मप्रचारका केही पर्चाहरू यी दुई भाषामा बाँड्ने गरेको उल्लेखले यता नेपाली बोल्ने र बुझ्नेहरूको सङ्ख्या बढिरहेको सङ्केत दिन्छ।

सुरुमा नेपाली जनसङ्ख्या अवश्य धेरै थिएन। नेपालमा सामन्ती प्रथाअन्तर्गतको शोषण प्रबल विकर्षण शक्तिको रूपमा बढिरहेकै समय दार्जीलिङमा अङ्ग्रेजी शासन सुरु भएपछि खुल्न थालेका कामधन्धा र विशेष गरी चिया उद्योगको द्रुत विकास आकर्षण शक्ति बन्यो। 'चियाको बोटमा पैसा फल्छ' भन्ने सुनेर नेपालबाट निर्गमनको परिमाण धेरै बढ्न गएको दार्जीलिङका जनगणनाहरूको विश्लेषणले प्रमाणित गर्छ।

हूकरले सन् 1848 मा एक ठाउँ लेखेका छन् :

> दार्जीलिङमा ब्रिटिसको प्रजा भई धेरै नेपालीहरू बस्छन्, तिनीहरूमा धेरैजसो आफ्नै देशबाट भाग्नेहरू छन् जहाँ फर्केर गए जमिनदारहरूले फेरि पक्रनेछन् भनी तिनीहरू त्रस्त छन्। (The Nepalese, of whom there were many residing as British subjects in Dorjiling, were mostly runaways from their own country, and afraid of being claimed, should they return to it, by the lords of the soil) जङ्गबहादुरले घरलौरी गरी 6 हजार लिम्बूलाई काठमाडौँ लाँदा त्यहाँ हैजा चली कति सय मर्दा घरलौरीदेखि बाँचेकाहरू जहानैसँग भागेर दार्जीलिङ गएको पनि तिनले लेखेका छन्। (Jung

Bahadur levied a force of 6000 of them, who were contoned at Kathmandoo, where the cholera breaking out, carried off some hundreds, causing many families who dreaded conscription to flock to Darjeeling).

सन् 1835 मा अङ्ग्रेजहरूले सिक्किमबाट कथित रूपमा भेटस्वरूप पाएको 138 वर्गमाइलको दार्जीलिङ भूभागमा सन् 1869 मा गरिएको जनगणनाअनुसार जनसङ्ख्या 22,607 पुगेको थियो। त्यसमा हिन्दू भनी देखाइएको 9,889 जनामा अधिकांश नेपालीहरू भएका अनुमान त्यसको तीन वर्षपछि भएको दार्जीलिङ जिल्लाको पहिलो जनगणनाको आधारमा सहजै लगाउन सकिन्छ।

भारतमा पहिलो आधिकारिक जनगणना सन् 1871 मा भएको थियो। दार्जीलिङको निम्ति छुट्टै सङ्कलन सी.एफ. मगार्थले गरेका थिए। तिनले गरेको सङ्कलनअनुसार सन् 1872 मा दार्जीलिङ जिल्लाको मोठ जनसङ्ख्या 94,712 थियो। तिनमा नेपाली कति थिए उत्तर खोज्ने प्रयास गरौँ।

मगार्थको जनगणना रिपोर्टमा जनसङ्ख्यालाई जातिहरूमा वर्गीकरण गरिएको छ, तर त्यो वैज्ञानिक छैन। तिनको तपसिलमा 'नेपाली' शीर्षकमा एकचालीस जात र जातिहरू छन्, तर फेहरिस्तमा ब्राह्मण र क्षत्रिय (बाहुन-छेत्री) हरू छैनन्। यस विषयमा विशद विश्लेषण मैले एउटा लेखमा गरिसकेको छु। यहाँ त्यसलाई नदोहोऱ्याई यति नै भन्छु मगार्थले मोठ जनसङ्ख्याको 34 प्रतिशत नेपाली देखाएका थिए भने तिनको भूललाई सच्याउने जमर्को गर्दा त्यो प्रतिशत 38.4 निकाल्न सकिन्छ। अथवा 94,712 मोठ सङ्ख्यामा 35,380 नेपाली थिए। मगार्थको आँकडामा नेपाली शीर्षकबाहिर देखाइएका ब्राह्मण र राजपुतलाई पहाडका बासिन्दा नेपाली बाहुन-छेत्री मान्यौँ भने अनि तथाकथित सानो जातहरूको सङ्ख्या जोड्दा प्राय: चार हजार निस्कन्छ। अथवा नेपाली नै आफ्नो मूल भाषा भएकाहरू चार हजार थिए भने रहल 31 हजार भोटबर्मेली भाषागोष्ठीका अथवा मतवालीहरू थिए।

"एक दिन नेपालीहरूले सम्पूर्ण जिल्ला नै ढाक्नेछन्," दार्जीलिङका तत्कालीन अङ्ग्रेज जिल्लापालले एउटा टिप्पणी लेखेका थिए। त्यो रिपोर्टमै लेखिएको छ, "दार्जीलिङमा आएर बसोबास गर्न थालेका अधिकांश नेपाली जिल्लामा स्थायी भई बस्छन्।" नेपालीबाहेक दार्जीलिङमा आएर बस्ने समतलवासीहरूबारे लेखिएको छ, "तिनीहरू स्थायी बस्दैनन्।" अनि डब्लु.डब्लु. हण्टरअनुसार जिल्लामा बसुन्जेल उनीहरू यहाँका जनसाधारणबाट भिन्नै छुटेर बस्छन्।

प्रत्येक दशकको जनगणना विश्लेषणतिर नगई सारांशमा दुईओटा कुरा राखौँ – एउटा हो चियाबारीको सङ्ख्या वृद्धिसँगै दार्जीलिङ पहाडमा जनसङ्ख्या वृद्धि अनि दार्जीलिङमा नेपालीहरू स्थायी बासिन्दा भएपछि त्यहाँ नेपालमा जन्मनेहरूको सङ्ख्यामा कमी।

सन् 1856 देखि दार्जीलिङमा चियाकमानहरू खोलिँदै गए। सन् 1872 मा 74 ओटा चियाकमान थिए भने सन् 1890 मा चियाकमानहरूको सङ्ख्या 177 पुग्यो। सन् 1905 देखि 1935 सम्मको अवधिमा 148 ओटा चियाकमानहरू थिए। सन् 1872 को मोठ जनसङ्ख्या 94,712 थियो। सन् 1891 मा यो सङ्ख्या बढेर 223,314 पुगेको थियो जसमा 88,000 ले आफू नेपालमा जन्मेको भनी दर्ता गराएका थिए। सन् 1901 मा मोठ जनसङ्ख्या 249,117 थियो भने तिनमा नेपालीको जनसङ्ख्या 134,000 पुगेको थियो। सन् 1931 मा जिल्लाको जनसङ्ख्या 319,635 थियो जसमा 161,308 नेपालीहरू थिए अनि उनीहरूमा केवल 59 हजार नेपालमा जन्मेका थिए। सन् 1951 मा मोठ जनसङ्ख्या 445,260 मा 223,088 जना नेपाली थिए, जसमा केवल 749 जना नेपालमा जन्मेका थिए। अनि नेपाली जनसङ्ख्याको ठूलो हिस्सा चियाकमानमा थियो। उदाहरणार्थ, सन् 1941 मा जिल्लाको मोठ जनसङ्ख्या 376,369 थियो जसको 67.6 प्रतिशत वा 254,608 जना नेपाली थिए अनि त्यस सङ्ख्यामा 114,738 (45.6 प्रतिशत) नेपाली चियाकमानमा थिए।

यस नेपाली जनसङ्ख्यामा धेरैजसो सुरुमा भोटबर्मेली परिवारका आफ्नै बोलीहरू बोल्ने गोष्ठी वा मतवालीहरू थिए। सन् 1941 कै आँकडा हेरौँ, 254,608 नेपालीमा 57,619 राई, त्यसपछि 43,114 तामाङ, 17,803 लिम्बू, 17,262 मगर, 15,455 गुरुङ थिए। सङ्क्षेपमा तागाधारी (बाहुन-छेत्री) को सङ्ख्या 34,940 अनि कथित सानो जातको सङ्ख्या 31,480 थिए अथवा नेपाली नै मूल भाषाको रूपमा बोल्नेहरू 66,420 थियो भने प्रारम्भमा भोटबर्मेली बोल्ने मतवालीहरूको सङ्ख्या लगभग 190,000 हजार थियो। सन् 1872 को जनगणना (पहिलो आधिकारिक जनगणना) हेरौँ। जिल्लाको मोठ जनसङ्ख्या 94,712 मा 33,258 नेपाली देखिन्छन्। यस नेपाली जनसङ्ख्यामा छेत्री एकै जना दर्ता छैन, ठकुरी 56, गोर्खा 51, पहाडिया 92, पर्वतिया 21 लाई छेत्री मान्यौँ भने योगफल 220 पुग्छ। ब्राह्मण दर्ता गर्ने 904 सबै नेपाली बाहुन नहुन पनि सक्छन्। कथित सानो जातमा जम्मा 2,466 (दमाईं 252, कामी 1,886, सार्की 328) छन्। भोटबर्मेली परिवारका भाषा बोल्नेहरूको सङ्ख्यामा सबभन्दा धेरै राई (6,754), त्यसपछि तामाङ (6,567), लिम्बू

(4,663), गुरुङ (3,687), मगर (3,020), घर्ती (1,419), नेवार (1,120) गर्दै मोठ जनसङ्ख्या 27,982 पुग्छ।

आफूभित्र भाषिक, सामाजिक, सांस्कृतिक वैविध्य बोकेको यस जनगोष्ठीमा एकत्व र जातीयताको भावना पलाएर बिस्तारै प्रखर र सशक्त हुनुमा कुन कारकतत्त्वहरू उत्तरदायी थिए त्यस कुराले विश्लेषण खोज्छ।

दार्जीलिङमा बस्ने नेपालीहरू प्राय: सबै सर्वहारावर्गका थिए। प्राय: सबै नै श्रमजीवी थिए। नेपाली जनगोष्ठीभित्र एउटा वर्गको अर्को वर्गमाथि अत्याचार र शोषण थिएन। उन्नाइसौँ शताब्दीको शेष भागसम्म निम्न मध्यवित्त श्रेणी पलाउन लागेको समाजमा पुँजीपति र जमिनदार कोही थिएनन्। त्यस जनगोष्ठीभित्र शासक र शासित थिएनन्, सबै अरूद्वारा शासित थिए। अङ्ग्रेजहरू सर्वेसर्वा मालिक थिए, चियाउद्योग उनीहरूकै थियो। ठूलठूला पदमा उनीहरू थिए भने सरकारी तथा गैरसरकारी दफ्तरहरूतिर निम्न पदमा समतलवासी अनेपाली थिए। मध्यम र ससाना व्यापार गर्ने तथा काठमिस्त्री, नापित, जुत्ता बनाउने र सिलाउनेहरू छिमेकी बिहार एवं राजस्थानका थिए। श्रम बेचेर जीविकोपार्जन गर्ने नेपालीहरू अर्थनैतिक शोषणका सिकार थिए। नेपालमा रहेको सामन्ती प्रथाको अत्याचारबाट उम्केर मुग्लान पस्नेहरू कुनै रामराज्यमा पुगेनन्। सामन्ती व्यवस्थाको शोषणबाट उनीहरू ब्रिटिस भारतको औपनिवेशिक शासनको घानमा परे। छाउनी र सहरतिर सिपाही तथा श्रमिक हुने, बस्तीतिर ससाना किसान बन्ने, कुलैनबारी र विशेष गरी चियाबारीमा हजारौँको सङ्ख्यामा श्रमजीवी बन्ने दार्जीलिङको नेपाली समाजमा जातीय भावना परियोजित गरी जगाउनु कुनै मध्यवित्तीय वा पुँजीवादी वर्गीय स्वार्थ थिएन।

तर यसप्रकारले शोषित, पीडित बनेका नेपालीहरूमा अरूको अव्यवस्थाको तुलनाले 'हामी' भन्दा 'उनीहरू' भिन्दै भन्ने भावना बढ्नु अस्वाभाविक थिएन। अर्थनैतिक (आर्थिक) मात्र होइन सामाजिक दृष्टिले पनि 'हामी' हेय भएको लाग्ने कारण थिए। अङ्ग्रेजहरूको कुरै छाडिदिउँ, समतलबाट आउने शिक्षित किराना र पवित्रतावादी हिन्दूहरू पनि पहिला जाति, धर्म, संस्कृति, बोलीको अनुप्रस्थ विभेदमा मात्र बाँडिएको, तर पछि तागाधारी वर्चस्वको स्थापनाको फलस्वरूप जात प्रथाको अनुलम्ब विभाजनमा परेका अधिकांश मतवाली जनजातिले बनेको नेपाली समाजलाई 'म्लेच्छ' भएकोले हेय ठान्ने गरेको तथ्य छ। शिक्षित 'बाबु' र महाजन खालहरू श्रमजीवी नेपालीलाई 'कुल्ली' बाहेक अरू के ठान्थे होलान्। 'तिनीहरू' बनाम 'हामी' को तीव्र चेतनाको उत्स त्यस अवस्थामा पाइन्छ।

दार्जीलिङको नेपालीमा एकत्वको चेतना बढ्ने कारण नेपालमा जस्तो राष्ट्रिय एकता थिएन, यो चेतना नेपालीभित्रकै वर्गीय स्वार्थले उकासेन। बरु यो चेतना शोषित र शासित वर्गको समूह चेतनाको आडमा बढेको थियो।

नेपाली भाषामा यता पत्रपत्रिका निस्कन थालेपछि तिनमा प्रकाशित सयौँ लेखहरूको विषयवस्तु विश्लेषण (content analysis) गर्दा निस्केको निष्कर्षले यस विचारलाई थप पुष्टि दिएको हो।

जातीय एकत्वको भावना बढ्ने यस प्रक्रियामा दोस्रो प्रबल कारकतत्त्व बनेको थियो नेपाली भाषा। नेपालमा आफ्ना मूलथलो किपटतिर भोटबर्मेली परिवारका बोलीहरू बोलिए पनि सबैले नभए पनि धेरैले नेपाली बुझ्थे वा बोल्न पनि सक्थे होलान्। नेपालको एकीकरणपछि राजकाजको भाषा बनेकाले नेपालीको प्रसार बढेको थियो।

विभिन्न भोटबर्मेली बोलीहरू आफ्नो प्राथमिक वा मातृभाषा भएका मानिसहरू हजारौँको सङ्ख्यामा मुग्लान पसेपछि भिन्नभिन्न भाषागोष्ठीका समूहहरू पृथक्पृथक् बस्न सक्ने सम्भावना धेरै थिएन। हाटबजार, सहर, चियाबारीका धुरा, छाउनी र गारदतिर छ्यासमिस भएर काम गर्दा र बस्न पर्दा ती आगन्तुकहरूले आफूले दोस्रो भाषाको रूपमा जानेको नेपाली भाषाका महत्त्व बढ्न थाल्यो। त्यसरी आउने कतिपय तामाङ र नेवारहरूले दार्जीलिङमै नेपाली भाषा सिकेका पनि बूढापाकाहरू बताउँथे। बसाइँ सरेर यता स्थायी रूपमा बस्न थाल्नेहरूको दोस्रो-तेस्रो पुस्ताले आफ्ना बाबुबाजेका बोलीहरू भुलेर नेपालीलाई नै पहिलो भाषा मान्ने प्रक्रिया सुरु भइसकेको थियो।

अङ्ग्रेजको शासन सुरु भएपछि दार्जीलिङ भेकमा खोलिन थालेका शिक्षालयहरूमा कतै नेपाली पढाइँदैन थियो। शिक्षाको माध्यम थियो हिन्दी, लेप्चा, अङ्ग्रेजी, उर्दू र फारसी। नेपालबाट निस्केर मुग्लान पस्नेहरू सजिलै हिन्दीभाषी हुन सक्थे, तर त्यसो भएन। धेरै प्रतिकूल अवस्थामा पनि नेपाली भाषा दार्जीलिङमा सुरक्षित बोली मात्र भएर बाँचेन, यस भाषाले धेरै प्रगति पनि गर्‍यो। शिक्षामा पछौटे र धेरैजसो मजदुरी गर्ने जनसमुदायले यसलाई विचार विनिमय गर्ने तथा आफ्ना भाव र भावना अभिव्यक्त गर्ने साधन बनाएर जोहो नगरेको भए दार्जीलिङमा नेपाली जाति हुने थिएन।

जनगणनाअनुसार दार्जीलिङमा बोलिने यस्ता भोटबर्मेली परिवारका भाषाहरूको सङ्ख्या 19 थियो। सन् 1907 मा प्रकाशित *दार्जीलिङ गेजेटियर* भन्छ, “दार्जीलिङको बासिन्दा भएका तिब्बती वा भोटियाहरू आफ्नै जातिअनुसारको सिक्किमे, भोटानी वा तिब्बती भाषा चलाउँछन्, आदिवासी लाप्चेहरू अझै केही

मात्रामा आफ्नै लाप्चे भाषा बोल्छन् ... पहाडमा लिम्बू प्राय: सामान्य अर्को भाषा हो अनि तराईमा धिमाल आदिवासीका सन्तान अझै आफ्नै धिमाल भाषा प्रयोग गर्छन्। दार्जीलिङका नेपालीहरूमा खम्बु (जिम्दार), मुर्मी र मङ्गर जातीय भाषाहरूमा खुबै प्रचलित छन्। तर नेवार, गुरुङ, सुनुवार र याखा पनि बोलिन्छन्। जनसङ्ख्याको पाँच भागमा एक भाग खस वा नेपाली हिन्दी बोल्छन् जसलाई साधरणत: पहाडिया वा पर्वतिया पनि भनिन्छ। ... विभिन्न जनजातिका भाषालाई यसले क्रमश: मास्दैछ अनि यो दार्जीलिङको बहुभाषी जिल्लामा एउटा साझे भाषा (lingua franca) भई प्रचलित छ।"

आफ्नो विशिष्ट चिनारीको मूल टेवा नेपाली भाषा भएकैले होला हिन्दीमा शिक्षित हुन थालेपछि दार्जीलिङका शिक्षित नेपालीहरूले प्राथमिक शिक्षाको माध्यम नेपाली हुनुपर्छ भन्ने माग गर्न थाले। नेपाली भाषाका मान्यताका निम्ति भएका क्रमिक मागहरू हामी अकारण उठेका पाउँदैनौं।

पहिला नेपालीलाई प्राथमिक शिक्षाको माध्यम बनाउने माग, नेपालीलाई माध्यमिक स्तरमा एउटा विषय बनाउनुपर्ने माग, शिक्षाको माध्यम नेपाली बनाउनुपर्ने माग, स्नातक स्तरसम्म नेपालीलाई शिक्षाको माध्यम बनाउनुपर्ने माग, नेपाली विषयमा अनर्स र एम.ए.को पढाइ सुरु गर्नुपर्ने माग, अनि सन् 1961 मा पश्चिम बङ्गाल सरकारले बाहुन-छेत्री, कामी, दमाईं, सार्कीलाई मात्र नेपालीभाषी मानी दार्जीलिङ जिल्लामा उनीहरूको सङ्ख्या 19 प्रतिशत मात्र रहेको कैफियत दिँदै बङ्गाली भाषालाई एक मात्र सरकारी भाषा बनाउने ऐन पारित गरिँदा दार्जीलिङ जिल्लामा अधिकांश जनता नेपाली भएको र उनीहरूको मातृभाषा नेपाली भएकाले नेपाली भाषा पनि एउटा सरकारी भाषा हुनुपर्छ भन्दै चर्केको सफल जनआन्दोलन।

राज्य पुनर्गठन आयोगले आफ्नो रिपोर्टमा कुनै अञ्चलमा एउटा भाषा विशेष बोल्नेहरूको सङ्ख्या 70 प्रतिशत वा अधिक छ भने सो भाषालाई त्यस अञ्चलको एउटा राजकीय भाषाको मान्यता दिन सकिन्छ भनी गरेको सिफारिसअनुसार दार्जीलिङ पार्वत्य अञ्चलमा नेपाली एउटा सरकारी भाषा बन्यो।

दार्जीलिङमा नेपालीले सरकारी भाषाको मान्यता पाएपछि 'भाषा हाम्रो प्राण हो' भन्दै सन् 1972 देखि दार्जीलिङबाट सुरु गरिएको र भारतव्यापी बनेको नेपाली भाषाले संविधानको आठौँ अनुसूचीमा ठाउँ पाउनुपर्छ भन्ने माग सन् 1992 मा सफल भयो। यसप्रकार दार्जीलिङमा नेपाली जातित्व वा नेपालीको विशिष्ट जातीय चिनारीको प्रश्नसँग नेपाली भाषाको सम्बन्ध

नङ-मासुको रहेको देख्छौँ।

सन् 1924 मा दार्जीलिङमा 'नेपाली साहित्य सम्मेलन' स्थापित गर्ने उद्देश्यले डाकिएको पहिलो सभाका सभापति हरिप्रसाद प्रधानको भाषणको एक अंश हेरौँ :

> "यस सम्मेलनको नाउँ 'नेपाली साहित्य सम्मेलन' राख्नुपर्ला भन्ने हाम्रो विचार छ किनभने 'नेपाली' शब्दको विस्तृत अर्थ हुन्छ। यस शब्दले नेपाल देशका सबै जाति जस्तै– मगर, गुरुङ, किराँती, नेवार, लिम्बू इत्यादि सबको बोध हुन्छ औ यसद्वारा माथि भनिएका तथा अरूअरू यावत् जातिहरू एउटै महान् नेपाली राष्ट्रका अङ्ग रहेछन् भन्ने पनि जाहेर हुन्छ।
>
> कसैकसैका मनमा यो सम्मेलनले त गोर्खालीहरूको भाषाको पो उन्नति गर्न आँटेको रहेछ भन्ने शङ्का उत्पन्न होला तर त्यस्तो त शङ्का गर्नु उचित छैन किनभने नेपाली भाषा आजकल हिमालचल प्रदेशको ligua franca (सबैले बुझ्ने भाषा) जस्तो भई रहेछ। यस प्रदेशमा बस्ने मानिसले पृथक्पृथक् बोली बोले पनि नेपाली भाषालाई न बुझ्ने कोही छैनन्। ... औ कुनै एउटा जातिले यस भाषालाई यो मेरै भाषा मात्र हो भन्न सुहाउँदैन।"

दार्जीलिङमा नेपाली जातिको विकास प्रक्रिया विश्लेषण गर्दा यस जातिमा समाहित हुने अलग तत्त्वहरूको विलय महत्त्वपूर्ण देखिन्छ। नेपाली साहित्य सम्मेलनका आठ उद्देश्यमा एउटा थियो :

> "नेपालका भिन्नभिन्न भाषा तथा साहित्य अध्ययन गर्ने तथा तत्सम्बन्धी उत्तमउत्तम साहित्य प्रकाशित गर्ने।" सभापतिको भाषणमा हरिप्रसाद प्रधानले भनेका थिए, "सम्मेलनको एउटा अर्को उद्देश्य नेपालका प्राचीन भाषाहरू तथा साहित्यको खोजी गर्ने पनि छ। तपाईंहरू सबैलाई नेवारी भाषाको ठूलो प्राचीन साहित्य छ भन्ने कुरा ता थाहा नै छ। यस भाषालाई अचेल नेवारहरूले त बिर्सीसके भने अरूको त के कुरा? ... यसै गरी लेपचा भाषा पनि अचेल लुप्त हुन लागिरहेछ। ई भाषाहरू अध्ययन गरी इनका प्राचीन ग्रन्थहरू प्रकाशित गरी इनलाई लुप्त हुन नदिनु भनी सम्मेलनले ठूलो उद्योग गर्नेछ।"

'नेपाली साहित्य सम्मेलन' नामक एउटा संस्था स्थापित हवस् भन्दै प्रस्ताव राख्दा यहाँ विवेच्य विषयमाथि पारसमणि प्रधानको कथन थियो :

> "हामी नेपाली हौँ। नेपाली भन्नाले हामी धेरै जातकाहरू यहाँ समावेश छौँ। नेवार, गुरुङ, राई, लिम्बू, तामाङ, भोटे, लाप्चे, थारू, सुनुवार समस्त जातिहरू नेपाली हुन्। प्रत्येक जातिको स्वतन्त्र भाषा छ, तर सबैले बोल्न सक्ने र बुझ्न सक्ने भाषा नेपाली हुनाले हामीले पहिले नेपाली भाषाको उन्नति गर्नुपरेको हो। ... सज्जनगण! नेपाली भाषा मात्र उन्नति गर्नुपर्छ भन्ने मेरो अभिप्राय होइन। आफ्ना-आफ्ना भाषालाई पनि अब यसरी भुलेर हुँदैन। नेवारी बोलीको, गुरुङ बोलीको, राई बोलीको, लिम्बू बोलीको, तामाङ बोलीको, भोटे, लाप्चे समस्त बोलीहरूको पनि खोजी गरौँ, किताबहरू लेखी जहाँसम्म हुन सकेको नवीन जागृति गराई उन्नति गर्नुपर्छ।"

तर त्यसो कहिले भएन, समयले त्यस्तो माग गरेन।

दार्जीलिङमा नेपाली जातीयताको भावना बढ्नुमा नेपालको पहाड खण्डबाट समान सामाजिक व्यवस्थाबाट निस्केर आएको अनुभव, साझा वेशभूषा (दौरासुरुवाल) र हतियार (खुकुरी) को भूमिका पनि मानिलिऊँ। विद्वान्हरूले अन्य कारकतत्त्वहरू पनि बताएका छन्, जसमा 'जात प्रथा' लाई प्रमुखता दिइएको पाइन्छ। "दार्जीलिङको समाज मुख्यत: हिन्दू समाज भएकोले नै यसद्वारा व्याप्त हुँदैछ। तर ती वर्ग स्तरीकरण भएका पनि हुन्छन्। धेरैजसोलाई उनीहरूको समाज सुदृढ बनाउनमा नेपालीलाई मातृभाषाको रूप दिने कार्यभन्दा जात प्रथाको प्रभाव धेरै कार्यकर थियो। जात प्रथालाई हटाइदिनु होस् अनि सङ्घटकहरू पृथक्पृथक् भएर ढल्नेछन्।" (The Nepali society of Darjeeling, being a predominantly Hindu society, the caste system automatically forms the basis of their social organization and almost every aspect of the society is pervaded by the same. But they are also class stratified. The influence of the caste system, rather than the adoption of 'Nepali' as their mother tongue for many, was instrumental in making their society an organic whole. Remove the caste system and the constituent parts will fall apart.)

नेपाली भाषाभन्दा जात प्रथाको भूमिका दार्जीलिङमा नेपाली जातीयताको

विकासमा धेर महत्त्वको छ भन्ने विचारसँग पूर्ण सहमति जनाउन नसकिने केही कारण प्रस्तुत गर्दछु। दार्जीलिङको नेपाली जनसङ्ख्यामा सुरुदेखि भोटबर्मेली परिवारका भाषा बोल्ने मतवालीहरूको प्रभुत्व भएको चर्चा अघि नै भइसक्यो। तिनमा नेवारहरूबाहेक अन्य जातिभित्र आफ्नै जात प्रथाको परम्परा थिएन। ठूला जातहरूको सामाजिक वर्चस्व नभएको र अधिकांश मतवालीहरूद्वारा गठित दार्जीलिङको नेपाली समाजमा जात प्रथाका नियमहरू कठोरतासँग पालन भएको नदेखिएको एकाध विदेशी पर्यवेक्षकहरूले उल्लेख पनि गरेका छन्। अन्तरजात र अन्तरजनजातीय बिहेवारीहरूले सुरुदेखि सामाजिक स्वीकृति प्राप्त गरेका उदाहरण पाइन्छन्। दार्जीलिङ मुग्लान पस्नेहरू जातपातको आधारमा नेपालमा चल्ने 'मुलुकी ऐन' देखि मुक्त थिए।

अर्को कुरा, दार्जीलिङमा नेपालीहरूको बस्ती बस्न थालेदेखि जात प्रथाविरोधी धार्मिक आन्दोलनहरूको प्रभाव व्याप्त थियो। सन् 1883 मा दार्जीलिङ सहरदेखि केही टाढा रंगबुलमा आफूद्वारा स्थापित धाममा जोसमनि सम्प्रदायका विद्रोही सन्त कवि ज्ञानदिलले 'उदयलहरी' रचना पूर्ण गरे। विभिन्न जात र जनजातिका धेरै जना मानिस तिनका शिष्य भएका र दार्जीलिङ भेकमा त्यो सम्प्रदाय व्यापक भएको लोकपरम्परा छ।

त्यसभन्दा केहीअघि नै सन् 1875 मा भारतको एउटा सुधारवादी आन्दोलन 'आर्यसमाज' को शाखा दार्जीलिङमा खोलिएको थियो। पहिला जोसमनि सम्प्रदायमा प्रविष्ट भएर पछि आर्यसमाजमा प्रमुख भूमिका निर्वाह गर्ने आर्यसमाजका संस्थापक दयानन्द सरस्वतीको *सत्यार्थ प्रकाश* को नेपाली उल्था गर्ने पं. दिलुसिंह राईले सन् 1899 को 'दार्जीलिङको पहिरो' को सवाई रचेका थिए।

ब्रिटिस शासनसँगसँगै सुरु भएको इसाई धर्म प्रचारबाट आकर्षित भएर केही नेपालीहरू इसाई भएका थिए। जात प्रथा नमान्ने जोसमनि, आर्यसमाजी तथा इसाईहरूका कारण नेपाली जातित्वलाई चोट पुगेको देखिँदैन। बरु उनीहरूले पनि त्यस जातित्वको आधार नै बनिसकेको नेपाली भाषा त्यागेनन्। यस भेकमा नेपाली पाठ्यपुस्तक लेख्ने, बालसाहित्य उल्था गरी छपाउने, *गोर्खापत्रको* हाराहारी *गोर्खे खबर* कागत निकालेर नेपालीमा पत्रकारिता सुरु गर्ने एक जना इसाई पादरी गङ्गाप्रसाद प्रधान थिए।

यसरी जात, जाति, धर्मलाई उछिनेर नेपाली भाषा दार्जीलिङमा जातीय तादात्म्यताको बलियो सूत्र बनेको इतिहास केलाउन सकिन्छ।

नेपाली जातीय भावनाको विकास प्रक्रियाकै फलस्वरूप दार्जीलिङमा नेपाली भाषासम्बन्धी मागहरूसँगै बिस्तारै जातीय आधारमा राजनैतिक मागहरू उठ्न

थाले। गत खिष्टीय शताब्दीको सुरुदेखि गोर्खा नाउँ गरेका सामाजिक संस्थाहरू आए। राजनैतिक भन्न सकिने स्थानीय सङ्गठन 'हिलमेन्स एसोसिएसन' (1917) र नेपाली, भुटिया, लाप्चेलाई प्रतिनिधित्व गर्ने 'नेबुला' (1936) भए पनि गोर्खा वा नेपाली जातित्वको आधारमा सन् 1943 मा डम्बरसिंह गुरुङको नेतृत्वमा गोर्खा लिग स्थापित भयो। अनि यसले प्राय: आधा शताब्दी नै दार्जीलिङको राजनीतिमा आधिपत्य जमायो। प्राय: सँगसँगै भारतको कम्युनिस्ट पार्टीको दार्जीलिङ शाखा खोलियो। भाषाको आधारमा प्रान्त गठन गर्ने कङ्ग्रेसको पुरानो प्रस्ताव थियो। सम्भवत: त्यसकै आधारमा कम्युनिस्ट पार्टीको दार्जीलिङ शाखाको पक्षमा रतनलाल ब्राह्मण (माइला बाजे) र गणेशलाल सुब्बाले हस्ताक्षर गरी अन्य भाषिक प्रान्तसरह 'गोर्खास्थान' को माग गर्दै भारत स्वाधीन हुने बेला गठित अन्तरिम सरकारका दुई कर्णधार जवाहरलाल नेहरू र लियाकत अली खानलाई ज्ञापनपत्र चढाएका थिए। पछि त्यस पार्टीले प्रान्तको माग छाडेर नेपालीभाषी बहुसङ्ख्या भएको दार्जीलिङका निम्ति आञ्चलिक स्वायत्त शासनको माग गर्न थाल्यो।

त्यसपछिको मुख्य घटना सुवास घिसिङको नेतृत्वमा सन् 1980 मा गोर्खा राष्ट्रिय मुक्ति मोर्चाको गठन, छुट्टै प्रान्त (राज्य) गोर्खाल्याण्डको माग र हिंसात्मक आन्दोलनपछि सन् 1988 मा दार्जीलिङ गोर्खा स्वायत्त पार्वत्य परिषद्को गठन हो।

नेपाली भाषा भारतको संविधानको आठौँ अनुसूचीमा अन्तर्भुक्त हुनुपर्छ भन्ने माग 22 अगस्त 1992 मा सफल भयो। भारतको आधिकारिक सर्वोच्च साहित्यिक संस्थान साहित्य अकादमी, दिल्लीले नेपाली भाषालाई सन् 1975 मै मान्यता दिइसकेको थियो।

दार्जीलिङको नेपाली जाति त्यस गोष्ठीभित्रको कुनै शक्तिशाली वर्ग वा जात वा जनजातिको स्वार्थ या दबाबमा नभई समानताको अनि त्यसलाई दिगो बनाउने सूत्र नेपाली भाषा भएको आधारमा गठित भएको लाग्छ।

उता दार्जीलिङमा नेपालका सबै राजनैतिक पार्टीहरूको नेतृत्व तागाधारी विशेष गरी बाहुनहरूकै हातमा भएको चर्चा गरिन्छ। त्यसको तुलनामा सुरुदेखि नै दार्जीलिङले भिन्नै चित्र प्रस्तुत गरेको छ। भनौँ भने त्यहाँको राजनैतिक नेतृत्व मतवालीवर्गमा पर्ने व्यक्तिहरूकै हातमा देखिन्छ। गोर्खा लिगका संस्थापक र अन्य नेताहरूमा डम्बरसिंह गुरुङ, अरिबहादुर गुरुङ, आर.डी. सुब्बा, टी. मनेन, शिवकुमार राई, देवप्रकाश राई अनि गत दुई दशकदेखि त्यस भेकमा राजनैतिक प्रभुत्व कायम गर्ने सुवास घिसिङ केही त्यस्ता नाउँ हुन्।

राजनीतिबाहेक सामाजिक साहित्यिक क्षेत्रमा पनि त्यस्तै अवस्था छ। औपचारिक साहित्य लेखन सुरु हुनुअघि सवाई र लहरी लेख्ने, नेपालीमा नाटक लेख्ने र खेल्ने, बालकथा, पाठ्यपुस्तक र खबर कागत निकाल्ने अनि पछि नेपाली साहित्यमा अनेकौं असल कृति रच्ने अधिकांश नाउँ मतवालीवर्गमा पर्ने व्यक्तिहरूकै छन्।

नेपालीहरूका दुईओटा महत्त्वपूर्ण माग (एउटा राजनैतिक र अर्को भाषिक) सन् 1988 र सन् 1992 मा पूरा भएकै समयतिर हठात् दार्जीलिङको नेपाली जातिभित्र जनजातीय चिनारीका अडानहरू प्रकट हुन थाले। धेरैले व्याख्यातित ठानेको, घटनाको सूत्रपात्र भयो र जातजात, जातिजातिका सङ्घसंस्थाहरू सक्रिय हुन सुरु भए।

दार्जीलिङको नेपाली जातिमा चिनिएको समन्वयात्मक (syncretic) एकीभवन के एउटा भ्रम मात्र हो? macro Identity (भारतको सन्दर्भमा नेपाली जातिको विशिष्ट चिनारी) को साटो नेपाली जातिअन्तर्गत पृथक् जनजातिहरूको micro identity का निम्ति उच्चरित हुन थालेका स्वरहरूले धेरै सचेत व्यक्तिहरूलाई चिन्तित बनाएको देखिन्छ। केही भारतीय नेपाली सङ्गठनहरूले भारतको एक अरबभन्दा धेरै जनसङ्ख्यामा नेपालीहरूको सङ्ख्या एक करोड भएको दाबी गर्दै आए पनि आधिकारिक वा सरकारी हिसाबमा नेपालीहरूको सङ्ख्या प्राय: बीस लाखजति मात्र छ। एक अरबमा एक करोड एक प्रतिशत होला तर जनगणना रिपोर्टअनुसार बीस लाखको हिसाबमा 0.04 प्रतिशत बन्छ अनि त्यसमा पनि नेपाली जातिका सङ्गठक तत्त्वहरूले आफ्नो जाति, भाषा, धर्म, संस्कृतिका आधारमा आफ्नै छुट्टै चिनारीको आवाज उठाउन थालेपछि र नेपालीको साटो आफ्नो पृथक् जातिको नाउँमा आफूलाई दर्ता गर्न थाले भने भारतको परिप्रेक्ष्यमा अणुविक्षण यन्त्रले मात्र देख्न सकिने सङ्ख्यामा नेपाली पुग्ने मात्र होइन त्यसका सङ्घटक मान्य जनजाति वा जनगोष्ठीहरू विलुप्त हुने आशङ्काले ग्रस्त छन् सचेतहरू। भारतीय नेपाली एउटा सङ्कटको घडीमा परेको विचार पोख्छन् धेरै।

प्रश्न उठ्छ : यथार्थमा के जातीय अस्तित्वमा जनजातीय चिनारीका अडानहरूपछि नेपाली जाति विनाशकारी हाँक हुन नसक्ला?

नेपालको सन्दर्भमा नेपाली जातिभित्रै सबै क्षेत्रमा तागाधारी वर्चस्व र तागाधारीको विपरीतार्थक शब्द पनि नहुने मतवाली वा भोटबर्मेली र अन्य जातिहरूमा विभेद alienation को एउटा मुद्दा छ। सन् 1990 मा भएको प्रजातान्त्रिक क्रान्ति नै नेपालमा जनजातीय चिनारी पहिल्याउने राजनीतिको

निम्ति एउटा नयाँ गोरेटो मानिन्छ। समाजवैज्ञानिकहरूले सन् 1990 को जनआन्दोलन क्रान्तिपछिको नेपालले जनजातीय चिनारी व्यवस्थित पार्ने समस्याहरू भोग्नुपर्ने भविष्यवाणी गरिसकेको डेविड गेल्नरले *ट्रान्सफोर्मेसन् अफ द नेप्लीज स्टेट* मा लेखेका छन्।

नेपालको निम्ति यो समस्या जीवन्त भएको र हुने कारणहरू हामी बुझ्छौं। यहाँ जातीय/जनजातीय सन्तुलन र सामन्जस्य नभएको देख्छौं। अनि पोहोरको 'द महेशचन्द्र रेग्मी लेक्चर' दिने डा. हर्क गुरुङले 'त्रिशूल र दोर्जे' मा नेपाली राजनीतिको सामाजिक परिवेशबारे एउटा प्रसङ्ग उठाउँदै भन्नुभएको थियो :

> "यो विगतको हिन्दू नेपालको अवशेष हो भने मेची नदी पूर्व हेरेमा भविष्यमा नेपाली समाजको प्रारूप देख्न सकिन्छ। नेपालमा मुलुकी ऐनका पण्डितहरू परम्परागत कर्मकाण्ड र चाकडीमा व्यस्त रहे भने सिक्किम र दार्जीलिङका नेपालीभाषीहरूले नेपाली इतिहास, साहित्य, कला र राजनीतिलाई परिभाषित गर्ने काममा मार्गदर्शन दिए। नेपाली राजनीतिमा तागाधारीहरूको एकाधिकार यथावत् छ भने मुलुकी ऐनबाट स्वतन्त्र सिक्किम र दार्जीलिङमा सबै जात/जातिहरू समानताका आधारमा खुला प्रतिस्पर्धा गर्दछन्।" (पृ. 4)

अवस्था त्यस्तो हुँदाहुँदै पनि र जातीय एकताकै आधारमा केही महत्त्वपूर्ण उपलब्धिहरू सम्भव हुन सके पनि वर्तमानमा उच्चरित हुन थालेका छुट्टै स्वजातीय चिनारीका प्रश्नहरू विचारणीय छन्।

डा. गुरुङ भन्नुहुन्छ, "नेपालमा जातीय भावना नौलो अनुभूति होइन, सुषुप्त रहेको भावनाको अभिव्यक्ति हो।" अनि फेरि, "अहिलेको नेपालमा देखापरेका सामाजिक सजीवताअघिका शासनकालमा भएका दमनहरूको परिणति हो।" वर्तमान दार्जीलिङको सन्दर्भमा यस्तै विचार व्यक्त गर्न सकिँदैन।

दार्जीलिङ भेकमा माथि उल्लिखित नेपाली जातित्व सुदृढ हुने प्रक्रिया चलिरहेको समय यसमा सङ्घटक हुने विभिन्न जनजातिका निजी विशिष्टता लोप भएर गइहालेको पनि थिएन। राई, लिम्बु, गुरुङ, नेवार, तामाङ आदिले नेपाली भाषालाई प्राय: मातृभाषाको रूपमा अङ्गीकार गरे पनि साइनो शब्दहरू भने अझै पनि प्रायश: आफ्नो जनजातीय बोलीकै प्रयोग गर्छन्। नेवारहरू दिदीलाई तता, भाउजूलाई तताजू, मामालाई पाजु, माइजूलाई मलेजू, फुपूलाई नीनी, बाजे-बोजूलाई अजा-अजी भन्छन् भने तामाङहरू दिदीलाई नाना,

बाजेलाई म्हेम्हे, बोजूलाई माम, काकालाई आगु, फुपालाई पुसाई भन्छन्।

साइनो शब्दहरूको प्रयोगबाहेक धेरैजसोले जन्म, विवाह र मृत्युमा आफ्नो कर्मकाण्ड भुलेका थिएनन्। यस्ता कर्मकाण्ड एकापट्टि बाहुन पुरोहितले गरे पनि सँगसँगै आफ्नो पुर्ख्यौली दस्तुरअनुसार सम्पन्न गरिन्थ्यो, अझै गरिन्छ।

अघि भनेझैँ मैले ethnicity लाई जनजाति अर्थमा लिएको छु। अनि यसरी विषयलाई बुझ्न खोज्दा 'एथ्निसिटी' बारे विभिन्न धारणाहरू उपयोगी बन्दछन्।

नेपाली भाषालाई अङ्गीकार गर्दै आफू नेपाली जातिको भन्ने अनुभव गर्नेहरूले आफ्ना बाबु-बाजेको कुरा सम्झेर आदिम/आद्यस्वरूपीय (primordial) भावना साँच्नु अस्वाभाविक होइन।

रगतको साइनोले अभिभावी भावनात्मक आशक्ति र निष्ठा जन्माउने गर्छ अनि यो कुनै एउटा समूहमा जन्मनेहरूको साझा सम्पत्ति हुन्छ। आधुनिक विश्वमा यस्तो जातीय/जनजातीय आशक्ति र त्योसँग टाँसिएका भावनाहरू त्यसै कारण देखिन्छन्, मानिसहरूले आफूलाई आफ्नै आदिमता वा आद्यताको काँचुलीबाट मुक्त पार्न सक्दैनन्, समाजवैज्ञानिकहरूमा एकथरीको राय छ।

आधुनिकतातिर अग्रसर भइरहेको बहुजातीय बहुभाषी देशहरूमा विशिष्ट जातीयताका मुद्दाहरू बौरी उठ्ने घटनापछि दुई सशक्त तर परस्पराश्रयी तथापि स्वतन्त्र र विपरीत उद्देश्य भएका तत्त्व उत्तरदायी हुन्छन् भन्दै पहिलो तत्त्व चिनारीको खोजी र दोस्रो विकास र प्रगतिको माग हो मान्छन्।[2]

दार्जीलिङमा धेरै कारणहरूले एउटा सिङ्गो नेपाली जातित्वको विकासमा विभिन्न आदिम आशक्तिहरू गौण भएर गए पनि निमिटयान्नै भएर लुप्त भइहालेको देखिँदैन। नेपाली जातित्व विकासको प्रक्रिया कार्यरत भइरहेको समय सन् 1924 मा नेपाली साहित्य सम्मेलनको स्थापना हुँदा दिएका भाषणहरू हामीले हेरिसक्यौँ।

शिक्षाको विकासले सामाजिक चेतनाहरू ल्याएपछि गत ख्रिष्टीय शताब्दीको प्रारम्भिक दशकतिर नेपाली जातिभित्रका जनजातिहरूमा कुनैकुनैले आफ्नै सामाजिक सङ्गठन खोल्ने काम नगरेका पनि होइनन्।

सन् 1922 मा 'नेपाली तामाङ बुद्धिष्ट एसोसिएसन' स्थापित भएको देखिन्छ। तथापि यो थियो बौद्ध धर्मको प्रचार र प्रसार अनि समाजमा नैतिक सुधार गर्ने उद्देश्य लिएर स्थापित संस्था। धेरैपछि यस संस्थाको नाउँबाट

---

[2] Cliifford Geertz, 'The Integrative Revolution: Primordial Sentiments and Civil Politics in New States', in John Hutchison & others (ed), Nationalism : *Critical Concepts in Political Science*, vol.I, Routedge, London, 2000, p. 111.

'नेपाली' हटेर 'अखिल भारतीय' भयो। उद्देश्य भिन्नै भए।

यो संस्था स्थापित भएकै समयतिर 'नेवार समाज', 'किराँत समाज' जस्ता सामाजिक संस्थाहरू पनि स्थापित भए। तथापि उनीहरू धेरै प्रभावकारी भएको पाइँदैन। तर खिष्टाब्द नब्बेको दशक सुरु हुने बेलादेखि दार्जीलिङमा विभिन्न जातजातिका अनेकौँ सङ्गठनहरू स्थापित हुन थाले। निष्क्रिय भइसकेका पुराना संस्थाहरू फेरि सक्रिय हुन थाले।

तामाङहरूको अखिल भारतीय तामाङ बौद्ध सङ्गठन अनि तामाङ घेदुङ, किराँत याकथुङ चुमलुङ र यायोक्खाको छत्रछायामा खुलेका राई र लिम्बूहरूका सङ्गठन, किराँत राई खोम्बु सङ्गठन, याक्खा (देवान) सङ्गठन, गुरुङहरूको तमु छोजं धीं, मगरहरूको मगर लाफा सङ्घ, नेवार समाज, अनुसूचित जातका सङ्गठनहरू, सुनुवारहरूको किराँतवंशी सुनुवार (मुखिया) कोइँच्बु इत्यादि। अनि अचेल बाहुन-छेत्रीहरूको श्री हितकारी तागाधारी सम्मेलनका शाखाहरू खोलिएका खबरहरू छापामा निकै देखिँदैछन्।

यस्ता संस्थाहरू राजनैतिक क्रियाकलापमा संलग्न छैनन्। उनीहरूको मूल उद्देश्य आफ्नो समाज र संस्कृति बचाउनु भएको बताउँछन्। यस्ता सङ्गठनहरूलाई आफ्नो-आफ्नो गोष्ठीका सबै सदस्यहरूको समर्थन प्राप्त नभएकाले प्राय: विवादहरू पनि उठिरहन्छन्।

सब जनगोष्ठीहरूका लोकधुन, बाजागाजा साझा सम्पत्ति बनाएर एउटा अर्केस्ट्रल ऐक्य (orchestral unity) को रचना नै नेपाली सङ्गीत हो भन्दै नेपाली साहित्यका एक ख्यातिप्राप्त कवि मनप्रसाद सुब्बा लेख्छन्, "नेपाल राष्ट्रभित्रका विभिन्न जात र जातिलाई 'नेपाली राष्ट्रियता' ले एक सूत्रमा बाँधेको छ भने भारतमा नेपाली जाति-गोष्ठीभित्र पर्ने विभिन्न जातलाई 'नेपाली जातित्व' ले एकमुष्ठ पारी सबल तुल्याएको छ, जुन सबलता लिएर हामीले एकदुई राष्ट्रिय अधिकारहरू हासिल गरिसकेका छौँ, अरू केही मूल अधिकारहरू हासिल गर्न बाँकी नै छ। तर नेपाली वा गोर्खा जातिको यो मुठ्ठी छुट्टाछुट्टै औँला र आँख्लाहरूमा विभाजित भएर गए केही हासिल गर्नु त परै जाओस्, हाम्रो पहिचान नै लोप भएर जाने स्थिति मात्र हात लाग्नेछ। हाम्रो जातिभित्रका जातपातका एकाइहरू विच्छिन्न भएपछि 'नेपाली जाति' र 'नेपाली संस्कृति' नामको अस्तित्व नै कहाँ रहन्छ।"[3]

यस्तो अर्को एउटा लेखको अन्तिम अनुच्छेद यहाँ राख्दछु :

---

[3] मनप्रसाद सुब्बा, 'नेपाली जाति र संस्कृति समसामयिक परिप्रेक्ष्यमा।'

> "कसैको तर्क अर्कै सुन्छु । केराजस्तो गाँजिएको गोर्खा एकतालाई तोड्न नै मैदानेहरूले यो जात-जातको चाल चलेको भन्छन् । 'बाँड अनि शासन गर' भन्ने नीति । यस्तै हो भने पनि सिकाउने र मूलमन्त्रसमेत दिने त हाम्रैहरू हुनुपर्छ । फेरि कोही भन्छन्, 'हाम्रो जातले जनजातिको दर्जा पाए धेरै सहुलियत र आरक्षणहरू पाउनेछौँ । भविष्यमा हाम्रा जातकाहरू *आइएएस, आइपीएस* भएर निस्कनेछन् ।' कुरा ठीकै हो र राम्रो पनि । तर जनजातिको दर्जा हासिल गर्ने होडमा अदूरदर्शी तरिकाले हस्याङ-फस्याङ गर्दा अहिलेको गोर्खा जाति नै टुक्रा-टुक्रा भयो भने हामीमाथि थिचोमिचो गर्न खप्पिस मैदानेहरूले यहाँ सजिलै अतिक्रमण गर्लान् । त्यस समय हाम्रा *आइएएस, आइपीएस* गर्नेहरू नेपालको शरणार्थी शिविरमा पुग्न नपर्ला ? अहिले भोटाङको सर्वोच्च ओहदामा पुग्ने श्री टेकनाथ रिजाल नेपालमा शरणार्थी जीवन बिताइरहनुभएको छ । शरणार्थी शिविरतिर हेर्‍यौँ भने धेरै भोटाङ सरकारका प्रथम दर्जाका पदाधिकारी रहिसकेकाहरू भेटिन्छन् । अबको 50-60 वर्षमा त्यस्तो स्थिति त हामीमा नआउला ? खास कुरो के हो ? यो के भइरहेछ ? ठीकै हुँदैछ कि बेठीक हुँदैछ ? यी प्रश्नहरूको ठीक उत्तर हामीले आजै खोज्नपर्छ जस्तो लाग्छ ।[4]

भाषा र जातीयताको आधारमा गरिएका मागमा दार्जीलिङका अधिकांश नेपालीहरू एकबद्ध हुने गरेको देखेर नेपाली जातिलाई फुटाउन जात-जातको संस्था खोल्ने षडयन्त्र गरिएको भन्ने विचार बोक्नेहरू थोरै छैनन् ।

अर्कोथरीको विचारअनुसार दार्जीलिङमा विभिन्न जातजातिले आफ्ना विशिष्ट चिनारीहरूका प्रश्न उठाउन थाल्नु नेपालमा सन् 1990 को जनआन्दोलनपछि सुषुप्त जातीय भावनाहरू अभिव्यक्त हुन थालेका घटनाहरूकै प्रतिध्वनि हो । तर दार्जीलिङमा नेपाली जातित्वको विकास जसरी भएको थियो त्यसको विश्लेषण गर्दा उक्त व्याख्या चित्तबुझ्दो लाग्दैन ।

मलाई जहाँसम्म लाग्छ दार्जीलिङका नेपालीहरूमा पृथक् जातजातिको चिनारी धेरै मुखर भएको एउटा मुख्य कारण 8 अगस्त 1990 को दिन तत्कालीन प्रधानमन्त्री विश्वनाथ प्रताप सिंहद्वारा धेरै समयदेखि थान्कोमा राखिएको मण्डल आयोगको रिपोर्टलाई हठात् क्रियान्वित गर्ने विवादास्पद घोषणा हो । नेपालमा

[4] सन्त राई, 'छरपस्टिएका संस्मरणभित्र जातजातका क्रियाकलाप', सुनचरी समाचार, 29 जुलाई, 2004।

सन् 1990 को जनआन्दोलनकै समकालमा भएको यो घोषणा वी.पी. सिंहले अन्य कारणले उत्तेजित भई गरेको अस्वीकार गरे पनि शिक्षालय र नोकरीचाकरीमा 'अन्य पछौटे वर्ग' (Other Backward Classes) को निम्ति 27 प्रतिशत स्थान आरक्षण कुनै अरू कारणले नसोची, नबुझी, कुनै राष्ट्रिय सहमति नबनाई गरेको काम भनेर धेरैले आलोचना गरेका छन्। अनुसूचित जात र जनजातिको निम्ति वर्षौंदेखि 22.5 प्रतिशत स्थान आरक्षित थियो भने यस नयाँ वर्गलाई दिइएको 27 प्रतिशत जोड्दा आरक्षणको प्रतिशत 49.5 पुग्ने भयो। फलस्वरूप यसले प्रतिकूल प्रतिक्रियाहरू जन्मायो।

प्रख्यात समाजवैज्ञानिकहरू सबैले 'मण्डल रिपोर्ट' को कटु आलोचना गरेका छन्। यसमा पछौटे वर्ग वा जातहरू चिन्हित गर्ने मापदण्डहरू भ्रमात्मक, पुराना थोत्रा र दुर्बल आँकडाहरूमा आधारित थिए। यो रिपोर्टले स्वाधीनतापछि भारतीय समाज संरचनामा आएका परिवर्तनहरूलाई आफ्नो ध्यानमा नराखेको र मण्डलीकरणले भारतीय समाजमा जात र जातिको आधारमा अनावश्यक विभेद र विभाजनहरू ल्याएको समाजवैज्ञानिकहरू बताउँछन्।[5]

जेहोस्, हुने हुनामी भइहाल्यो र त्यसको प्रभाव दार्जीलिङको नेपाली जातिमा पर्न गऱ्यो। आफ्नो छुट्टै चिनारीको होडबाजीपछि नोकरीचाकरीमा आरक्षणको आकर्षण कार्यरत छ। मेरा प्रश्नहरूको उत्तरमा सबै यस्ता जातजातिको प्रतिनिधित्व गर्नेहरूले 'ओबीसी' को सुविधाकै कुरा निकाल्छन्। तागाधारी सङ्गठनका सक्रिय सदस्यहरूको पनि उत्तर एउटै पाइएको छ।

अन्य पछौटे वर्गलाई नोकरीचाकरी आदिमा आरक्षण दिने राजनीतिको सरोकार ओहोदा, पद वा क्षमता बाँडचुँड पारेर उपभोग गर्ने विधिसँग बढी गरिने हुन्छ, सामाजिक न्यायको निम्ति सङ्घर्षसँग होइन। भारतको संविधानमा अनुसूचित जातका निम्ति आरक्षणको व्यवस्था गरिएको चालीसबयालीस वर्षपछि सामाजिक न्यायको निम्ति त्यो रणनीतिको औचित्यबारे गहन तर्कवितर्क र अनुभवाश्रित (empirical) जाँच हुनुपर्थ्यो अनि मात्र त्यो सुविधा अन्यत्र विस्तार गरिनु उचित हुने थियो। आरक्षण नीति वास्तवमा वञ्चितहरूको स्वार्थमा नभई आरक्षणको लाभ पाउने जातका श्रेष्ठजन (elites) को स्वार्थमा हुने गरेको प्राय: सर्वविदित छ। जातिजात चिनारीको राजनीतिले यस प्रथाको कुप्रभावमा पर्नेहरू वा त्यसका सिकार हुनेहरूलाई लाभ पुऱ्याएको हुँदैन, नेताहरूले लाभ उपभोग गरिरहेको पाइन्छ। अनि सामाजिक न्याय स्थापित गर्ने

[5] M.N. Srinivas, ed, Caste : *Its Twentieth Century Avatar*, *Viking*, New Delhi, 1996.

रणनीति केवल आरक्षण हो ? कि यसले अझ असल नभए पनि समान अन्य रणनीति वा उपायहरूमाथि रोक मात्र लगाइरहेछ ? यी विषयहरूमा गहन तर्कवितर्क आवश्यक थियो तर सीमित राजनीतिक स्वार्थले यस्तो कुरामा विचार नगर्दो रहेछ ।

जनविचार नलिई वा त्यसलाई ध्यान नदिई प्रधानमन्त्री पद ओगट्ने एक जना व्यक्तिले लिएको अपर्झट निर्णयको परिणाम सर्वत्र देखियो भने दार्जीलिङको नेपाली जातिमा पनि त्यसको स्वागतयोग्य भन्नै नसकिने प्रभाव परेको छ ।

यसरी छुट्टै चिनारीबाट तिनीहरूलाई प्राप्त हुन सक्ने लाभको प्रलोभनमा सम्बन्धित जनजातीय गोष्ठीका श्रेष्ठजनहरू (elites) वा अझ भनौं उनीहरूको गुप्त षडयन्त्रकारी दल (elite cabal) आदिम भावनाहरू उकासेर त्यसकै आधारमा राजनीति गर्ने त्यस्तो आद्य भावनालाई राजनैतिक क्रियाकलापमा परिणत गरी आफ्नो नेतृत्व स्थापित गर्न लागिपरेका हुन्छन् । यस कुरामा दार्जीलिङ पनि अपवाद देखिँदैन । अनि धेरै यस्ता अगुवाइसँग टाँसिएका सङ्गठनहरूमा लाभ र सुविधाहरूका निम्ति विवादहरू परिस्फुट नभएका पनि होइनन् ।

भनिन्छ, एउटा जातीय स्थिति (ethnic situation) विकसित हुन त्यहाँ एउटा स्पष्ट शत्रु हुनुपर्छ, अनि राम्रो शत्रुको अभावमा धेरै आन्दोलनहरू सूत्रपातबिनै सेलाएर गएका छन् ।[6] शत्रुको रूपमा सत्ता, व्यवस्था, विभेद र बहिष्कार, उत्पीडन, शोषण आदि हुन सक्छ भने दार्जीलिङको नेपाली समाजभित्र कुनै सङ्घटक जनगोष्ठीले जातिभित्र त्यस्तो आन्तरिक स्थितिको सामना गर्नुपरेको अवस्था थिएन र छैन । कुनै वाह्यीक तत्त्व शत्रुको रूपमा चिनिन्छ भने त्यो विशेष कुनै जनजातीय गोष्ठीको मात्र नभई सम्पूर्ण नेपाली जातिको बैरी हुने गर्छ । यस्तो स्थितिको परिणाम जातीय अन्तर्कलह होइन तर जातीय एकबद्धता नै हुन्छ ।

कुनै जनजातिको संस्कृतिको जगेर्ना केवल त्यस समूहको प्रयास नभएर सम्पूर्ण नेपाली जातिको हुने गरेको सामाजिक प्रवृत्ति उदाहरणस्वरूप छन् । अचेल नेपाली जातिमा समाविष्ट विभिन्न जात र जनजाति सङ्घटक समूहका लोकगीत, लोकनृत्य, लोकपरम्पराको संरक्षण गर्ने उद्देश्यले स्थापित नेपाली/गोर्खा सांस्कृतिक मञ्चहरू निकै सक्रिय देखिन्छन् । सबैको समानता, समान भागीदारीको घडेरीमा दार्जीलिङको नेपाली जातीयता फस्टाइरहने आशा गरौं । केही जात

---

6 Dipankar Gupta, 'The Content of Ethnicity: Sikh Identity in a Comparative Prespective', OUP, Delhi, 1996, p. 1.

(जाति) लाई अन्य पछ्यौटे वर्गमा दर्ता, सिक्किम र पश्चिम बङ्गालमा तामाङ र लिम्बूलाई अनुसूचित जनजातिको मान्यता अनि यसबाट प्रेरित भएर अब अन्यहरूले हामी छुट्टै जाति हाम्रो धर्म, भाषा, संस्कृति छुट्टै भन्ने अडानहरूको जाति बिथोल्ने काम त नगर्ला भन्ने प्रश्न अनावश्यक होइन।

तथापि दार्जीलिङको नेपाली जाति टुक्रिएर विलुप्त नहोला भन्ने मेरो आफ्नो धारणा केवल भावना मात्र नभएर केही तथ्यहरूमा आधारित छ जुन तथ्यहरू ठोस र सबल छन्।

एक, अहिलेसम्म दार्जीलिङमा नेपाली जातीयताको विकासबारे जुन चर्चा गऱ्यौं त्यसमा यस जातिभित्रकै एउटा वर्गले अर्को वर्गमाथि थिचोमिचो गरेको वा एउटा विशेष जात वा जातिको वर्चस्व र प्रभुत्वमा अरू वञ्चित हुनुपरेको अवस्था पाएनौं।

दुई, कतिपय कारणवश नेपाली जातिका सङ्घटक जाति र भाषा गोष्ठीहरूले समयसमयमा आफ्नो छुट्टै चिनारीको प्रश्न उठाए पनि त्यो केवल आन्तरिक विषय भएजस्तो लाग्छ। आफ्नै घर वा भौगोलिक इलाकाबाहिर सबैले आफ्नो परिचय गोर्खा वा नेपाली (भारतीय नेपाली) नै दिन्छन्। परम्परा त्यस्तै हो क्यार। श्री ५ बडामहाराज पृथ्वीनारायण शाहको जीवनमा पढेको थिएँ। वाराणशी गइरहेका पृथ्वीनारायण शाहले चौबीसी पर्वतका राजाका कर्मचारीहरूलाई सँगै यात्रा गरौं भन्दा उनीहरूले भनेका थिए रे, "पहाडमा रहँदा पो गोर्खा पर्वत पाल्पा पिउठाना येस्तो थियो मधेशमा आयापछि त हामी पहाडिया एकै हुँछौं। हजुर्लाई छाडि मधिस्यातिर किन लागुँला।"

तीन, विभिन्न जनजातीय गोष्ठीले छुट्टै चिनारीका कुरा उठाउँदै हिन्दू चाड भनेर दसैं-तिहार नमान्ने निधो गरी आफ्नो सङ्गठनबाट फतवा जारी गर्ने काम गरे पनि धेरैजसोले त्यसलाई टेरेनन्। तामाङहरू माऽ पोहोर दसैंको टीका लाउने नलाउने विवाद निकै चर्किएको थियो। अखिल भारतीय तामाङ बौद्ध सङ्गठनको फरमानको तामाङ घेदुङद्वारा विरोधले परिवेश केही उत्तप्त भएको थियो। प्राप्त रिपोर्टहरूअनुसार अधिकांश तामाङ, राई, लिम्बू, गुरुङ, मगर आदिले दसैं मनाए। मनाउनेहरूको तर्क थियो – हाम्रो धर्म अर्कै भए पनि परम्परादेखि मनाएर आएको दसैं-तिहार धार्मिकभन्दा धेरै नेपाली/गोर्खाको सांस्कृतिक चाडपर्व हो।

अनुसूचित वा *ओबीसी* को दर्जा पाउँदा सम्बन्धित जनगोष्ठीका सबै वा अधिकांशलाई कुनै लाभ वा सुविधा प्राप्त हुने होइन, यस्ता लाभ र सुविधा पनि त्यो विशेष जनगोष्ठीमा श्रेष्ठजनको अचेल प्रचलित creamy layer वा

दूधको माथि तर लाग्ने स्तरले नै उपभोग गर्ने हुन्। अनुभवको आधारमा यस्तो अवस्थाप्रति धेरैजसो नै सचेत भएका छन्।

आफ्नो छुट्टै चिनारीको कुरा गर्नेहरूले अझसम्म आफू नेपाली वा गोर्खा भएको खुला खण्डन गरेका छैनन्, बरु त्यसको विपरीत भिन्नै भए पनि सबै नेपाली वा गोर्खा कहलाइने एउटै सङ्घीय व्यवस्थाको छत्रछायामा भएको स्वीकार गरेको यी विभिन्न जनजातीय सङ्गठनद्वारा प्रकाशित साहित्यमा स्पष्ट उल्लेख गरिएको हुन्छ। तथापि कहिलेकाहीँ यस्ता सङ्गठनका कार्यकर्ताले आफू छुट्टै भएको अडान लिँदा त्यही समुदायकाहरूले विपरीत तर्क प्रस्तुत गरेको पनि धेरै उदाहरण पाइन्छन्।

सङ्घटक जात, जाति, जनजातिले आफ्नो-आफ्नो चिनारीका अडानहरू लिँदैमा दार्जीलिङको नेपाली जाति विनष्ट नहोला। दार्जीलिङमा नेपाली जातित्वलाई क्षय हुन नदिने मूल टेवा नेपाली भाषाको व्यापक उपयोग नै हुने प्राय: निश्चित देखिन्छ। अहिले विभिन्न जातिगोष्ठीका संस्थाहरूले आफ्नो अडानहरू विषयमा जेजति प्रचार साहित्य प्रकाशित गर्दैछन् ती एकदुई पाताबाहेक सबै नेपालीमै गर्दैछन्। कारण आफ्ना पुर्ख्यौली बोली उनीहरू नै बुझ्दैनन्।

एकभाषी नै भइसकेको दार्जीलिङको नेपाली जाति छ। अनि यसरी एकभाषी भएको कारण कुनै स्वार्थगोष्ठीले आफ्नो भाषा अरूमाथि थोपरेकोले होइन तर समय र परिस्थितिले स्वत: त्यस्तो अवस्था सृष्टि गरेकाले हो। जनजातीय नयाँ अडान लिनेहरूले आफ्नो-आफ्नो बोली/भाषाको पुनरुद्धार गर्नुपर्ने र प्रचलनमा ल्याउनुपर्ने कुरा गरे पनि यो काम साह्रै सम्भव होलाजस्तो छैन अनि यसका कारण धेरै छन्।

भाषा जन्मँदै कसैले लिएर आउँदैन। भाषा एउटा सामाजिक संवृत्ति हो। दार्जीलिङमा हरेक जात, जाति, भाषागोष्ठीको आफ्नो छुट्टै क्षेत्रीयता (territoriality) छैन र पलपलमा अन्यहरूसँग सम्पर्कमा आउनुपर्ने हुँदा साझा भाषाको रूपमा नेपाली भाषा अनिवार्य बन्दछ।

दार्जीलिङको नेपाली समाजमा सङ्घटक जनजातिका भाषा उपभाषाहरू मृतप्राय: भइसकेको वास्तविकता छ। अनि अप्रचलित कुनै भाषा वा बोलीलाई बौरी उठाएर जीवित बनाउन सकेको घटनाको उदाहरण मानव इतिहासमा दुर्लभ भएको विद्वान्हरू मान्छन्।

यसबाहेक केवल भावनामा आएर कुरा उठाउनेहरूलाई आफ्नो भाषिका (बोली) का कति उपभाषिका छन् अनि कुनलाई स्तरीय मानेर स्वीकार गर्ने

भन्ने प्रश्न गर्दा यसबारे उनीहरूको अनभिज्ञता स्पष्ट झल्कन्छ।

दार्जीलिङे नेपाली साहित्यका मूल स्तम्भहरू धेरैजसो व्यक्तिहरू मतवालीवर्गका छन्। व्यापक सङ्ख्यामा पाठक, राष्ट्रियदेखि राज्य र स्थानीय स्तरसम्म समग्र नेपालीहरूको सम्मान प्राप्तिको ठाउँमा आफ्नो पुर्ख्यौली बोली सिकेर साहित्य रचना गरी सीमित पाठक र मान्यताको विकल्प आकर्षक हुन सक्तैन। नेपालबाट प्रकाशित नेपाली साहित्यबारेका ग्रन्थहरूमा नेपाली आफ्नो मातृभाषा नभएर पनि नेपाली भाषा र साहित्यलाई ठूलो योगदान पुऱ्याउनेहरू भनी शिवकुमार राई, इन्द्रबहादुर राई र अन्य राई, पादरी गङ्गाप्रसाद प्रधान, पारसमणि प्रधान, भाइचन्द प्रधान र अन्य नेवार तथा त्यसरी अरू गोष्ठीका नेपाली भाषासेवी र साहित्यकारहरूको वर्गीकरण गर्ने प्रथाले दार्जीलिङका नेपालीहरू कति राँकिने गर्छन् त्यसबारे नेपालका यहाँहरू धेरै अवगत हुनु हुन्न।

दार्जीलिङबाट नेपाली भाषा हट्यो भने त्यहाँ नेपाली नेपाली जाति रहनेछैन।

दार्जीलिङमा नेपाली जातीयताबारे चर्चा गर्दा यस व्याख्यानको सुरुमा त्यहाँ एउटा विशिष्ट नेपाली जाति निर्माणमा नेपालीको साझा भाग्य (अवस्था) र नेपाली भाषाले निर्वाह गरेको विषयलाई महत्त्व दिएको थिएँ। आज कथित रूपले यो जातिअन्तर्गत विच्छिन्नताका आवाजहरू उठे पनि सुदूर भविष्यसम्म दार्जीलिङमा यो जातित्व/जातीयताको मूल आधार वा घडेरी साझा भाग्य र साझा नेपाली भाषा नै हुने लाग्दछ।

# परिशिष्ट

Details from Mr.C.F. Magrath's
Darjeeling District Census Compilation, 1872

**सी.एफ. मगार्थको सङ्कलन**
सन् 1872 मा दार्जीलिङ जिल्लामा नेपाली जनसङ्ख्या
दार्जीलिङ जिल्लाको मोठ जनसङ्ख्या : सन् 1901 देखि 2001 सम्म
दार्जीलिङ जिल्लाको नेपाली जनसङ्ख्या सन् 1872-1951 जातजातिअनुसार

**जनगणना रिपोर्ट : सन् 1951**
नेपाली भाषा सहायक भाषाका रूपमा बोल्नेहरूको सङ्ख्या
दार्जीलिङ जिल्लाको मोठ जनसङ्ख्या : सन् 1901 देखि 2001 सम्म

सन् 1901 मा 249,117
सन् 1911 मा 265,550
सन् 1921 मा 282,748
सन् 1931 मा 319,635
सन् 1941 मा 376,369
सन् 1951 मा 445,260
सन् 1961 मा 624,640
सन् 1971 मा 781,777
सन् 1981 मा 1,024,269
सन् 1991 मा 1,335,618
सन् 2001 मा 1,605,900

## Details from Mr. C.F. Magrath's Darjeeling District Census Compilation, 1872

### ETHNICAL DIVISION OF THE POPULATION

| Name of Nationality, Tribe or Caste | Number |
|---|---|
| I. *NON-ASIATICS* | |
| Eurpeon | |
| English | 207 |
| Irish | 97 |
| Scotch | 42 |
| French | 19 |
| German | 43 |
| Italian | 6 |
| Prussian | 5 |
| **Total** | **419** |
| American | 1 |
| **TOTAL OF NON-ASIATICS** | **420** |

| Name of Nationality, Tribe or Caste | Number |
|---|---|
| II. *MIXED RACES* | |
| Eurasian | 32 |

*III. ASIATICS*

| | |
|---|---|
| A. *Other than Natives of India and British Burmah* Nepali, viz- | |
| Ale | 9 |
| Basnet | 2 |
| Chibing | 15 |
| Damai | 252 |
| Diwan | 7 |
| Dilpali | 4 |
| Durlami | 26 |
| Gain | 28 |
| Ghalia | 537 |
| Gharti | 1,419 |
| Ghatwal | 47 |
| Gurung | 3,150 |
| Gurkha | 51 |
| Hatwali | 7 |
| Iyakha | 235 |
| Jamadar | 331 |
| Jimi | 99 |
| Jirel | 2 |
| Kami | 1,886 |
| Khamba | 3,919 |

| | |
|---|---|
| Khawa | 310 |
| Limbu | 4,663 |
| Magar | 3,011 |
| Manjhi | 275 |
| Moktan | 3 |
| Newar | 1,087 |
| Pahariya | 92 |
| Parbatiya | 21 |
| Parel | 3 |
| Pradhan | 30 |
| Rai | 1,814 |
| Risingia | 6 |
| Sengten | 3 |
| Sarki | 328 |
| Suchikar | 5 |
| Sunawar | 1,192 |
| Tamang | 4 |
| Thakur | 56 |
| Thami | 13 |
| Thapa | 447 |
| Unspecified | 398 |
| **Total** | **25,781** |

B. *Natives of India and Burmah*

I. *Aboriginal Tribes*

| | |
|---|---|
| Aka | 165 |
| Dhimal | 873 |
| Lepcha | 3,952 |
| Mech | 893 |
| Murmi | 6,557 |
| Uraon | 1,648 |
| **Total** | **14,088** |

**सी.एफ. मगार्थाको सङ्कलन : सन् 1872 मा दार्जीलिङ जिल्लामा नेपाली जनसङ्ख्या**

| नेपाली | सङ्ख्या | नेपाली | सङ्ख्या |
|---|---|---|---|
| आले | 9 | खावा | 310 |
| बस्नेत | 2 | लिम्बू | 4,633 |
| चिविङ | 15 | मगर | 3,011 |
| दमाईं | 252 | माझी | 275 |
| दिवान | 7 | मोक्तान | 3 |
| दिल्पाली | 4 | नेवार | 1,087 |
| दुलार्मी | 26 | पहाडिया | 92 |
| गाइन् (गाइने) | 28 | पर्वतिया | 21 |
| घलिया (घले) | 537 | परेल | 3 |
| घर्ती | 1,419 | प्रधान | 30 |
| घटवाल (कटुवाल ?) | 47 | राई | 1,814 |
| गुरुङ | 3,150 | रिसिङ्गे | 6 |
| गुर्खा | 51 | सेडतेन | 3 |
| हातवाली (?) | 7 | सार्की | 328 |
| इयाखा (याखा) | 235 | सूचीकार | 5 |
| जमादार (जिम्दार, राई) | 331 | ठाकुर (ठकुरी ?) | 56 |
| जिमी | 99 | थामी | 13 |
| जिरेल | 2 | थापा | 447 |
| कामी | 1,886 | अनिर्दिष्ट | 398 |
| खम्बा (खम्बु, राई) | 3,913 | | |
| कुल | | | 25,781 |

**दार्जीलिङ जिल्लामा नेपाली जनसङ्ख्या सन्** 1872-1951 **जात–जातिअनुसार**

| | सन् 1872 | सन् 1901 | सन् 1911 | सन् 1921 | सन् 1931 | सन् 1941 | सन् 1951 |
|---|---|---|---|---|---|---|---|
| राई | 6,754 | 33,133 | 40,409 | 41,236 | 47,431 | 56,794 | 64,745 |
| छेत्री | - | 11,597 | 12,599 | - | - | 25,941 | 30,463 |
| सन्यासी | 267 | 1151 | 1,060 | - | - | - | 1,085 |
| ब्राह्मण | 904 | 6,470 | 6,195 | 8,174 | 8,719 | 8,999 | 11,317 |
| भुजेल | - | - | - | - | - | 5,816 | 5,745 |
| योगी | - | - | - | - | - | 454 | 474 |
| मगर | 3,020 | 11,912 | 12,451 | 14,934 | 16,299 | 17,262 | 19,413 |
| नेवार | 1,120 | 5,770 | 6,927 | 8,751 | 10,235 | 12,242 | 14,827 |
| तामाङ | 6,567 | 24,465 | 27,226 | 30,450 | 33,481 | 43,114 | 49,890 |
| गुरुङ | 3,687 | 8,378 | 9,268 | 9,575 | 11,154 | 15,455 | 17,864 |
| लिम्बू | 4,663 | 14,305 | 13,804 | 14,191 | 16,288 | 17,803 | 19,835 |
| सुनुवार | 11,94 | 4,428 | 3,820 | 3,691 | 4,055 | 4,822 | 4,803 |
| याखा | 242 | 1,143 | 1,119 | - | 850 | 825 | दर्ता गरिएन |
| दमाईं | 252 | 4,643 | 4,453 | 5,781 | 5,551 | 8,162 | 9,116 |
| कामी | 1,186 | 9,826 | 10,939 | 11,779 | 11,331 | 16,272 | 19,432 |
| सार्की | 328 | 1,823 | 1,992 | 2,036 | 2,432 | 2,778 | 2,932 |
| घर्ती | 1,419 | 3,448 | 3,584 | - | 2,053 | 496 | 998 |
| माझी | 275 | - | - | - | - | - | 327 |
| थामी | 13 | - | - | - | - | - | 475 |
| ठकुरी | 56 | - | - | - | - | - | 804 |
| थापा | 447 | - | - | - | - | - | - |
| गोर्खा | 51 | - | - | - | - | - | - |
| पहाडिया | 92 | - | - | - | - | - | - |
| पर्वतिया | 21 | - | - | - | - | - | - |

# समपूरक

लेखकको *पहिलो पहर,* दार्जीलिङ 1982, मा पहिलो लेख 'दार्जीलिङको नेपाली जाति : एउटा ऐतिहासिक अध्ययन' बाट एक उद्धरण पृष्ठ 40-42 ।

स्वाधीनतापछि पहिलो जनगणना सन् 1951 मा भयो । यसमा दार्जीलिङमा नेपाली जातिको विकासको प्रक्रियालाई दृष्टिमा नराखी राई, लिम्बू, तामाङ, नेवार, गुरुङ, मगर प्रवृत्तिलाई भिन्नै देखाउने चेष्टा भयो । विश्लेषणको निम्ति आँकडा आवश्यक बन्छ । सन् 1951 को जनगणनाले केवल बाहुन, छेत्री, सन्यासी, कामी, दमाईं र सार्कीको मातृभाषा ठानेर जिल्लामा नेपालीभाषीको सङ्ख्या 88,958 दियो । अरूलाई नेपाली मातृभाषा होइन तर आफ्नै बोली मातृभाषा बोल्ने अनि नेपाली दोस्रो बोल्ने देखाइयो । रिपोर्टका मातृभाषाको तालिका (1.9) र माध्यमिक वा सहायक (सव्सिड्यरि) भाषाको तालिका (1.10) मिलाएर यहाँ राखिन्छ :

| क.<br>मातृभाषा | ख.<br>बोल्नेको सङ्ख्या | ग.<br>ख–मा नेपाली भाषा सहायक भाषा भएको भनी देखाइएको सङ्ख्या |
|---|---|---|
| राई | 64,730 | 58,875 |
| तामाङ | 49,780 | 44,929 |
| लिम्बू | 20,092 | 17,833 |
| मगर | 19,413 | 17,423 |
| गुरुङ | 17,864 | 15,595 |
| नेवार | 14,827 | 13,412 |
| सुनुवार | 4,803 | 4,339 |
| थामी | 457 | 420 |

सन् 1951 मा दार्जीलिङमा यी विभिन्न बोली जान्ने र बोल्नेको सङ्ख्या कदापि त्यति धेरै थिएन, त्यस बेला हामी छात्र अवस्थामा हुनेहरूलाई थाहा छ, नेपाली साहित्य सम्मेलन स्थापित हुँदाका भाषणहरूले अर्कै कुरा तीस वर्षअघि नै भनेका थिए। जिल्लामा विभिन्न जम्मा 64 मातृभाषा बोल्नेमा दोस्रो भाषा नेपालीले बोल्नेहरू 210,030 देखाइए।

यही प्रसङ्गमा केही तथ्यहरूतिर सङ्केत गर्न एकदुई कुरा ध्यानमा राख्न योग्य छ। तालिका हेर्दा स्पष्ट देखिन्छ पहाडवासी भोटे, लाप्चे, सेर्पाहरू जम्मैले नेपाली दोस्रो भाषा लेखाए, अरूले त्यति लेखाएनन्, केही उदाहरणहरू :

| **क.**<br>**मातृभाषा** | **ख.**<br>**बोल्नेको सङ्ख्या** | **ग.**<br>**ख–मा नेपाली भाषा सहायक भाषा भएको भनी देखाइएको सङ्ख्या** | |
|---|---|---|---|
| बङ्गाली | 64,446 | 2,431 | 0.3% |
| हिन्दी | 30,240 | 3,372 | 11% |
| लाप्चे | 13,394 | 12,075* | 99% |
| सेर्पा | 8,989 | 8,126* | 98% |
| भोटिया | 7,063 | 6,335* | 88% |
| उर्दू | 2,980 | 634 | 0.2% |
| अङ्ग्रेजी | 2,665 | 698 | 2.6% |
| तिब्बती | 1,436 | 1,275* | 89% |
| डुक्पा | 1,121 | 986* | 88% |
| राजस्थानी | 714 | - | 00% |
| चिनियाँ | 509 | 14 | 3.4% |
| कागते | 350 | 314* | 90% |
| मारवाडी | 267 | 11 | 4.1% |

* अरूको तुलनामा पहाडवासी जातिहरूको नेपाली भाषासँग आत्मीयता देखिन्छ।

दार्जीलिङको समाजका गहिराइमा बस्ने अन्तर्धारामा प्रवाह र प्रतिप्रवाह चाखलाग्दो समाजशास्त्रीय अध्ययनको विषय छ।

सन् 1951 को जनगणनामा अर्को ध्यान दिनुपर्ने विषय पनि छ। सन् 1872 मा समतलवासीमा बङ्गालीहरूको सङ्ख्या एकसय पनि देखिँदैन। सन् 1953 को प्राय: 320,000 जनसङ्ख्यामा 37,444 बङ्गाली थिए भनी देखाइएको छ। सम्भवत: बङ्गालीभाषी राजवंशीजस्तै अरू पनि त्यसमा छन्। जाति, जात र जनजातिको आधारमा सन् 1941 मा बङ्गालीको सङ्ख्या

जिल्लामा 15,830 थियो भने हिन्दी भाषीको सङ्ख्या 21,996 थियो। सन् 1951 मा बङ्गाली भाषी 64,446 र हिन्दी भाषी 30,240 रहेको देखिन्छ।

बङ्गाल विभाजनपछि सिलीगुडी यातायातको केन्द्र भई यसको महत्त्व बढेको एउटा कारण थियो। प्रशस्त सङ्ख्यामा पूर्व बङ्गालबाट आएका शरणार्थीलाई पश्चिम बङ्गाल सरकारले त्यहाँ बसोबासको प्रबन्ध मिलाएकोले दार्जीलिङमा जनसाङ्ख्यिकीय परिवर्तन भएको देखिन्छ। सन् 1907 को गेजेटियरमा ओमेलीले सिलीगुडीलाई पहाडको फेदमा 784 जनसङ्ख्या र दलदल भएको औलो लाग्ने गाउँ भनेका थिए। सन् 1941 मा यसको जनसङ्ख्या 10,487 वा 73 प्रतिशत धेरै थियो भने दस वर्षमा यस सहरको जनसङ्ख्यामा 209.7 प्रतिशत वृद्धि भई सन् 1951 मा 32,480 पुगेको देखिन्छ।

सन् 1931-41 मा तीन पार्वत्य महकुमाको जनसङ्ख्या वृद्धि हरदर 17.8 प्रतिशत समतुल्य 18 प्रतिशत वृद्धि सिलीगुडीमा भएको थियो। सन् 1941-51 मा पार्वत्य महकुमाको वृद्धि हरदर 14.2 प्रतिशतको पाँच गुणाभन्दा बढी 61.2 प्रतिशत वृद्धि सिलीगुडी महकुमाको भयो। सन् 1951 को जनसङ्ख्या 445,260 मा जिल्लामै जन्मनेहरू 338,161 थिए। नेपालबाट आउने 749 थिए, पाकिस्तानबाट आउने 5,355 देखाइएको छ। भारतदेखि बाहिर एसियाका अरू देशमा जन्मेकाहरू (नेपाललगायत) अब 2,939 मात्र देखिन्छन्। बङ्गालका अरू जिल्लामा जन्मेकाहरू 6,788 थिए। बङ्गालदेखि बाहिर भारतमै जन्मेकाहरू 40,846 थिए।

सन् 1947 को *गेजेटियर*मा ए.जे. ड्यासले स्पष्ट भनेका छन्, “अरू पहाडवासीभन्दा नेपालीको बाहुल्य छ। अनि यी पहाडवासी जातिहरू जिल्लाको मोठ जनसङ्ख्यामा 94 प्रतिशत छन्। यो कुरा सन् 1941 को जनगणनामा सम्प्रदायहरूलाई सापेक्षिक गुरुत्व दिने पद्धतिले लुकाएको छ।”

सन् 1951 मा बाहुन, छेत्री, कामी, दमाईं, सार्कीलाई मात्र नेपालीभाषी गनेर यो भाषा बोल्नेको प्रतिशत मात्र देखाइयो। ‘नेपाली’ भनी राई, तामाङ, मगर, लिम्बू, गुरुङ, नेवार सबैलाई गनेर सन् 1941 मा 67.7 प्रतिशत जिल्लाको जनसङ्ख्यामा देखाइएको थियो भने सन् 1951 मा नेपाली जातिको प्रतिशत घटेर 59 मा पुग्छ। सन् 1941 मा सम्पूर्ण पहाडवासी जिल्लाको जनसङ्ख्याको 94 प्रतिशत थिए, जुन सन् 1951 मा घटेर 66.3 पुग्छ।

खोजिएका तथ्यहरू अनेक छन्, जो अर्कै ग्रन्थको विषय बन्न सक्छन्। सङ्क्षेपमा यहाँ यति नै प्रशस्त मानिन्छ। सन् 1951 पछि नै दुई प्रमुख घटना घटे। एउटा, राज्य पुनर्गठन आयोग गठन भयो। भाषाको आधारमा प्रादेशिक

काङ्ग्रेस कमिटि स्वाधीनताअघि गठित थिए। सन् 1947 पछि सत्तारुढ राजनीतिक दलको योजना पनि भाषाकै आधारमा स्वाधीन भारतमा प्रदेश वा राज्य गठन गर्ने भएकाले देशका राजनीतिक अवस्था र मागहरू ध्यानमा राखी यो आयोग गठन गरियो।

जनगणनाको हिसाबमा नेपालीभाषी केवल 20 प्रतिशत देखाइएकोले दार्जीलिङसम्बन्धी कुनै परामर्श आयोगको प्रतिवेदनमा रहेन। दोस्रो, यही आँकडाको आधारमा दार्जीलिङमा 20 प्रतिशत नेपालीभाषी देखाएर सन् 1961 मा पश्चिम बङ्गाल राजकीय भाषा विधेयक पारित गरी जिल्लाका विशिष्टता नविचारी यहाँ पनि बङ्गालका अरू इलाकामा झैँ बङ्गालीलाई एक मात्र राजकीय भाषा बनाउने चेष्टा गरियो।

सन् 1961 मा दार्जीलिङमा नेपाली जातीय एकताको भावना प्रखर भयो, एउटा हाँक पाएर। बृहत् रूपमा स्वत:स्फूर्त जनआन्दोलन प्रबल भएर मात्र गएन तर राजनीतिक दलको अकर्मण्यताले साझा मञ्च अनिवार्य बनायो। यो परिपाटी अझ चलिरहेकै छ।

सन् 1961 अर्को जनगणनाको वर्ष पनि थियो। नयाँ जनगणनाले नेपाली बोल्ने जनगोष्ठीको नेपाली भाषामा आधृत जातीय भावना धेरैअघिदेखि तीक्ष्ण हुँदै आइरहेको अनुमानलाई पुष्टि दिन्छ। यस जनगणनामा प्राय: जम्मै नेपालीले आफ्नो मातृभाषा नेपाली लेखाएको देखिन्छ। दस वर्षदेखि हजारौँको सङ्ख्याले आफ्नो मातृभाषा राई, तामाङ, मगर, लिम्बू, गुरुङ, नेवारी इत्यादि लेखाएको भए दस वर्षपछि हठात् यो परिवर्तन देखिने थिएन। निर्णयमा आउन कर लाग्छ, सन् 1951 मा दार्जीलिङको नेपालीको ऐतिह्य सामाजिक विकास प्रक्रियालाई बुझेर वा नबुझेर तर एउटा वास्तविकतालाई एउटा निस्पादित सत्यलाई विकृत पार्ने षडयन्त्र कुनै स्तरमा भएको थियो।

अब सन् 1961 मा जिल्लाको जनसङ्ख्या पुगेको छ 624,640। जम्मा मातृभाषाहरू गनिएका छन् 119 अनि जम्मै मातृभाषा बोल्नेको सङ्ख्या 624,676 देखाइन्छ तिनमा कमान बस्तीमा नेपालीभाषीको सङ्ख्या 306,806 र सहरमा 62,624 गरी जम्मा 369,130 छ। प्रतिशतको हिसाबमा जिल्लामा नेपालीभाषी दस वर्ष पहिलाको 66.3 बाट घटेर 59 प्रतिशत पुग्छ।

त्यस वर्ष राई बोली बोल्छु भन्ने मात्र 233, मगर बोल्ने 58, नेवारी लेखाउने 19, तामाङ लेखाउने 761, गुरुङ 4, लिम्बू बोल्ने 260, सुनुवार 214, गोर्खाली लेखाउने 22 जना छन्। यस्ता प्राय: कमान बस्ती इलाका र विशेष कालिम्पोङ महकुमामा देखिन्छन्। सबै जोड्दा नेपालीको सङ्ख्या 371,142

हुन्छ। प्रतिशतमा त्यति दुई हजारको केही हेरफेर छैन। मोठमा सन् 1941 मा 94 प्रतिशत भएको पहाडवासी दस वर्षपछि 66.3 थिए भने सन् 1971 मा 62.8 प्रतिशत बन्छ। सन् 1951 मा बङ्गालीभाषी 64,446 थिए, सन् 1961 मा सङ्ख्या 115,172 छ। वृद्धि प्रायः 56 प्रतिशत छ। दस वर्षअघि हिन्दीभाषी 30,240 थिए, सन् 1961 मा 47,812 छ। वृद्धि प्रतिशत 63.2 छ।

# दार्जीलिङ जिल्लाको नक्सा

